




राष्ट्रिय दैनिक

# गोल्डेन न्यूज

Golden News National Daily

○वर्ष ८ ○अंक ४९ ○श्रेणी 'क' ○२०७२ मंसिर १ गते मंगलबार ○ 17 Nov. 2015 ○पृष्ठ ४ ○मूल्य रू. ५/-




नाकाबन्दी र भूकम्प पीडित नेपालीलाई राहत दिन नसकेपनि

## कानून विपरित भीभीआइपीलाई विलासी सुविधा दिने सरकारी निर्णय

**गोल्डेन न्यूज संवाददाता**
**काठमाडौं ३० कार्तिक ।**

भारतीय नाकाबन्दीले मुलुकको आर्थिक अवस्था ऋणात्मक हुन पुगेका बेला सरकारले कानुनी मापदण्डै नबनाई निवर्तमान भीभीआईपीहरू पूर्वराष्ट्रपति, पूर्वउपराष्ट्रपति र पूर्वसभामुखलाई आजीवन विलासी गाडी सुविधा दिएको छ । मुलुक आर्थिक संकटमा परेका कारण भूकम्पपीडितलाई घर बनाउन २२२ लाख रुपैयाँ दिने निर्णयसमेत कार्यान्वयन गर्न नसकिरहेको सरकारले भीभीआईपी हरूलाई चालक, इन्धन र मर्मत खर्चसहित विलासी गाडी सुविधा दिएको हो । सर्वोच्च अदालतले कानुन नबनाई भीभीआईपीहरूलाई कुनै सुविधा नदिन दिएको निर्देशन उल्लंघन गर्दै सरकारले पूर्वराष्ट्रपति रामवरण यादलाई सचिवालय सहितको आवास र गाडी सुविधा दिएको छ । पूर्वउपराष्ट्रपति परमानन्द झालाई चालक र इन्धनसहितको गाडी सुविधा दिएको छ । पूर्वराष्ट्रपति, पूर्वउपराष्ट्रपति, पूर्वप्रधानमन्त्री, पूर्वप्रधानन्यायाधीश, पूर्वसभामुख र पूर्वगृहमन्त्रीसम्मका पूर्वविशिष्ट पदाधिकारीहरूलाई आजीवन गाडीलगायत सुविधा दिन गरिब मुलुकको अर्थतन्त्रले धान्न नसक्ने आवाज चर्को रूपमा उठेपछि यसअघि सरकारले उनीहरूलाई सुविधा दिने भनी गरेको निर्णय फिर्ता भएको थियो । प्रधानमन्त्री केपी ओली नेतृत्वको सरकारले मुलुकको गिर्दो अर्थतन्त्रको पर्वाहै नगरी पहिलो चरणमा निवर्तमान पूर्वविशिष्ट पदाधिकारीहरू यादव, झा र नेम्वाङलाई आजीवन गाडीलगायत सुविधा दिएको हो ।

सरकारले पूर्वराष्ट्रपति यादव र पूर्वउपराष्ट्रपति झालाई उनीहरू पदमा बहाल हुँदा चढेकै विलासी गाडी सुविधामा दिएको छ । पूर्वराष्ट्रपतिलाई निवासमा शाखा अधिकृत, नासु र कार्यालय सहयोगी सहितको सचिवालयको सुविधासमेत दिइएको छ । यादव र झाले पदबाट बाहिरिँदा आफू बहाल हुँदा चढेकै गाडी आफूखुसी लगेका थिए । मन्त्रिपरिषद बैठकले पछि दुवै जनालाई उनीहरूलाई पहिले चढदै आएकै गाडी सुविधामा दिने निर्णय गरिदिएको प्रधानमन्त्री कार्यालय स्रोतले जनायो । झाले उपराष्ट्रपतिको गाडी लगेका कारण नयाँ उपराष्ट्रपति नन्दबहादुर पुनका लागि नयाँ गाडी खरिद गर्न मन्त्रिपरिषदबाट निर्णय गरी उपराष्ट्रपति कार्यालयलाई ६० लाख रुपैयाँ निकासा दिइएको छ । सरकारले निवर्तमान सभामुख सुवास नेम्वाङलाई समेत विलासी गाडी सुविधा दिने निर्णय गरेको छ । नेम्वाङलाई गाडी खरिद गरी सुविधा दिन मन्त्रिपरिषदको निर्णयअनुसार संसद सचिवालयलाई ६० लाख रुपैयाँ निकासा दिइएको छ । सचिवालयले केही दिनभित्रै गाडी खरिद गरी नेम्वाङलाई उपलब्ध गराउनेछ ।

पूर्वराष्ट्रपति यादव, पूर्वउपराष्ट्रपति झा र पूर्वसभामुख नेम्वाङलाई चालक, मर्मत खर्च र इन्धन खर्चसमेत दिइएको छ । पूर्वराष्ट्रपतिलाई २ सय, पूर्वउपराष्ट्रपतिलाई १ सय ७५ र पूर्वसभामुखलाई १ सय ५० लिटर पेट्रोल मासिक उपलब्ध गराइनेछ । सरकारले पूर्वराष्ट्रपति, पूर्व उपराष्ट्रपति, पूर्वप्रधानमन्त्री, पूर्वप्रधानन्यायाधीश र पूर्वसभामुख लाई चालक, इन्धनसहितको गाडी सुविधा दिन गृह मन्त्रालयलाई निर्देशन दिएको थियो । गृहले सर्वोच्चको निर्देशनविपरीत कानुनी मापदण्ड नबनाई दिन सकिँदैन भन्दै भीभीआईपीहरूलाई सुविधा दिने प्रस्ताव मन्त्रिपरिषदमा नलगेको स्रोतले जनायो । गृहले नमानेपछि नेम्वाङको आग्रहमा संसद सचिवालयले उनलाई गाडी सुविधा दिन मन्त्रिपरिषदसमक्ष प्रस्ताव लगेको पनि स्रोतले बतायो । गृहले प्रस्ताव नलगेपछि प्रधानमन्त्री केपी ओलीको ठाडो आदेशमा मन्त्रिपरिषदले यादव, झा र नेम्वाङलाई गाडीलगायत सुविधा दिने निर्णय गरेको प्रधानमन्त्री तथा मन्त्रिपरिषद कार्यालयका एक अधिकारीले जनाएको इकान्तिपुले जनाएको छ । पूर्वसभामुखभन्दा माथिल्लो ओहोदाका पूर्वप्रधानमन्त्री र पूर्वप्रधानन्यायाधीशहरू कसैलाई पनि गाडी सुविधा नदिएको मन्त्रिपरिषदले प्रधानमन्त्रीको ठाडो आदेशमा पूर्वसभामुख नेम्वाङलाई मात्र गाडी सुविधा दिन रकम निकासा गरेको हो । पूर्व सभामुखहरू दमननाथ ढुंगाना, तारानाथ रानाभाट र रामचन्द्र पौडेललाई यस्तो सुविधा दिने निर्णय भएको छैन । 'निवर्तमान राष्ट्रपति यादव र उपराष्ट्रपति झालाई सरकारले पूर्वराष्ट्राध्यक्ष र पूर्वउपराष्ट्राध्यक्ष भएकाले गाडी सुविधा दिएको हो,' मन्त्रिपरिषदका एक अधिकारीले भने, 'तर नेम्वाङलाई भने प्रधानमन्त्री ओलीले आफ्नो पार्टीका नेता भएकाले सुविधा दिलाएका हुन् ।' अघिल्लो सरकारका पालामा तत्कालीन गृहमन्त्री वामदेव गौतमले पूर्वराष्ट्रपतिदेखि पूर्व सभामुखसम्मका पूर्वविशिष्ट पदाधिकारीहरूलाई आजीवन विलासी गाडी, सरकारी आवास तथा सचिवालयसहितको सुविधा दिने कानुनी व्यवस्था गर्न संसदमा विधेयक दर्ता गराएका थिए ।

गरिब मुलुकको अर्थतन्त्रले पूर्वभीभीआईपीहरूलाई आजीवन विलासी गाडी, सचिवालय र आवाससहितको सुविधा दिनु हुँदैन भनेर विधेयकको विरोध भएपछि तत्कालीन सभामुख नेम्वाङकै आग्रहमा सरकारले विधेयक फिर्ता लिएको थियो । अहिले भने नेम्वाङकै आग्रहमा सरकारले उनलाई विलासी गाडी सुविधा दिन लागेको हो ।

## नाकाबन्दीको असर चाउचाउमा पनि

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

भारतले गरेको अघोषित नाकाबन्दीका कारण अधिकांश चाउचाउ उद्योग बन्द हुन पुगेका छन् । उद्योगहरु बन्द भएपछि अहिले बजारमा चाउचाउको अभाव देखिएको छ । मानिसका लागि सबैभन्दा सस्तो र सजिलो खाजा चाउचाउले पसलका टासीहरु भरिभराउ हुन्थे भने त्यसले पसलको छुट्टै आकर्षण बनाउँदथ्यो । ती चाउचाउ पाइन छाडेपछि पसका टासीहरु खाली देखिन्छन् भने मानिसका लागि खाजाको थप समस्या पर्दै गएको छ । अन्य सामान लिएर बजारमा जाँदा पोखराका किराना व्यापारीहरुले 'अन्य सामान होइन २/४ कार्टुन चाउचाउ ल्याइदिनुस् न' भन्छन् । पोखराको मालेपाटन स्थित योजना किराना पसलकी संचालिका सुमिना हमाल भीनछन्-'चाउचाउ नुहँदा दिनको व्यापार नै घटेको छ । मेरो पसलबाट मात्र दिनमा ३ कार्टुन चाउचाउ विक्री हुन्थ्यो । अहिले चर्को मूल्य वृद्धि हुँदा समेत चाउचाउ पाउन सकेका छैनौं ।' चाउचाउ मात्र नपाइँदा दिनको करिब २ हजार रुपैयाँको सेल्स घटेको उनले बताइन ।

आम नेपालीहरुका लागि सजिलो र सस्तोमात्र नभएर स्वादिलो खाजा मानिने चाउचाउको उत्पादन र आपूर्तिमा कमि आएपछि पोखरा बजारमा रहेका डिपार्टमेन्टल स्टोर्सले समेत चाउचाउ विक्रीलाई निरन्तरता दिन सकेका छैनन् । पोखराको भाटभटेनी, विनायक, सेलवेज, मुनाल स्टोर्स जस्ता पसलमा समेत सर्वसाधारणले चाहेजति चाउचाउ पाउन सकेका छैनन् । त्यसमाथि मूल्य वृद्धि समेत भएकाले सर्वसाधारण मारमा छन् । चौधरी ग्रुपको उत्पादन वाइवाइको आपूर्ति गर्दै आएको अधिकृत विक्रेता काजल एण्ड कुशुम ट्रेडर्सका संचालक पुष्पराज पराजुलीले उद्योगबाट आफूहरुले मागेजति चाउचाउ पाउन नसक्दा वितरणमा गर्न नसकिएको स्वीकार गरे । उनले भने-'माग अनुसार चाउचाउको आपूर्ति नभएकोले आफ्नो क्षेत्रभित्र गाडीमा डुलाएर विक्री वितरण गर्न सकिएको छैन । व्यापारीहरु नगद लिएर गोदाममै पुग्ने गरेकोले सीमित परिमाणमा चाउचाउ दिइएको छ ।'

चाउचाउका लागि आवश्यक कच्चा पदार्थको अभाव भएपछि उद्योग बन्द गर्नुपरेको सञ्चालक हरुको भनाई छ । विभिन्न मुलुकबाट ल्याएको कच्चा पदार्थ नाकाबन्दीका कारण भन्सार नाकाहरुमा अड्किएको छ । चाउचाउलाई चाहिने गहुँको पिठोदेखि पाम आयल, लसुन प्याजसम्म विदेशबाटै आयात गर्नुपर्ने पोखरा नुडल्सका प्रबन्ध निर्देशक बाबुराम पन्तले बताए । उनका अनुसार विभिन्न ठाउँमा सञ्चालित ८ वटा उद्योगले दर्जनौं ब्रान्डमा चाउचाउ उत्पादन गरिरहेका छन् । पोखरामा सञ्चालित पोखरा नुडल्स र हिमश्री उद्योग पूर्ण रुपमा बन्द छन् । पोखरा नुडल्सले रम्बा, बोनस लगायत आधा दर्जन ब्रान्डमा चाउचाउ उत्पादन गर्छ भने हिमश्रीले रारा ब्रान्डमा चाउचाउ उत्पादन गर्छ । सबैभन्दा बढी बिक्री हुने वाईवाई चाउचाउको उद्योग पनि २५/२५ प्रतिशत क्षमतमा मात्र चलिरहेको चौधरी ग्रुपको भनाई छ । नवलपरासीको चौधरी ग्राम र ललितपुरको भैंसेपाटीबाट चाउचाउ उत्पादन गरिरहेको चौधरी ग्रुपले यही अवस्था लम्बिएमा उद्योग पूर्ण रुपमा बन्द हुने बताएको छ । वाईवाईको भैंसेपाटीमा रहेको उद्योग भने कच्चा पदार्थको अभावमा बन्द भइसकेको छ । नवलपरासीमा रहेको उद्योगमात्र केही क्षमतामा चलिरहेको हो । वाईवाई चाउचाउ वार्षिक २ अर्ब प्याकेट उत्पादन भइरहेको चौधरी ग्रुपका मिडिया महाप्रबन्धक मधुसुदन पौडेलले बताए ।

*बाँकी अन्तिम पृष्ठमा......*

## कोल्डस्टोर्समै आलु कुहिएपछि कृषक मर्कामा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

शीत भण्डारमा बीउका लागि राखेको आलु कुहिएपछि कास्कीका कृषकहरुले संञ्चालक सँग क्षति पूर्तिको माग गर्दै स्थानीय कृषि सेवा केन्द्रहरुमा निवेदन दिएका छन् । निजी स्तरवाट पोखरा-५, मालेपाटनमा संञ्चालन गरिएको पश्चिमाञ्चल कोल्डस्टोरले भण्डारण गरेको बीउ आलु कुहिएपछि कृषकहरुले क्षतिपूर्तिको माग गर्दै सेवा केन्द्रहरुमा निवेदन दिएका हुन् । कास्कीको आलुको भण्डार मानिएको हेमजाका ११ जना कृषकहरुले कृषि सेवा केन्द्र हेमजामा कुहिएको आलुको बीउको क्षतिपूर्ति दिन माग गर्दै उजुरी दिएको हेमजा कृषि सेवा केन्द्रका सहायक प्राविधिक गुरुप्रसाद अर्यालले जानकारी दिए । पत्रकार कमल पौडेल अथकले छुस्के डटकममा उल्लेख गरेअनुसार गत वैशाखमा यहाँका कृषकले बीउकोलागि आलु भण्डारण गर्न कोल्ड स्टोर्सलाई दिएकोमा यतिवेला आलु लगाउने वेला आलुको वोरा खोल्दा सवै कुहिएको कृषकहरुले बताएका छन् । यसरी आलु कुहिनेमा हेमजाका मात्र ७ वटा कृषक समूहको आलु कुहिएको कृषकहरुको भनाई छ ।

यसैगरी लेखनाथको वुढीवजार र शिशुवा क्षेत्रका कृषकहरुको पनि थुप्रै बीउ आलु कुहिएको कृषकहरुको भनाई छ । गत वैशाखमा ४ वोरा बीउ आलु भण्डरमा राखेका वुढीवजारका कृषक सुरेन्द्र थापाको सवै आलु कुहिएर आधा वोरा मात्र छनौटा आलु वाँकी रहेको उनले वताए । आलुको भण्डारण गर्न रकम तिरेर स्टोरलाई जिम्मा दिएपछि कुहिएको आलुको क्षतिपूर्ति स्टोरले नै उपलव्ध गराउन कृषकहरुको माग छ । आलुको बीउ कुहिएको भन्दै क्षतिपूर्ति माग गर्दा स्टोरले वेवास्ता गरेको कृषक थापाले बताए । एम एस-४२ जात र खुमल लक्ष्मीको पीभीएस दानाको २३ सय वोरा आलु हेमजाका कृषकहरुको मात्र कुहिएको कृषकहरुको भनाई छ भने अन्य क्षेत्रका कृषकहरुको आलु पनि सोही परिमाणमा कुहिएको पाईएको छ । कृषकहरुले राखेको ५० प्रतिशत बीउ आलु काम लाग्ने छैन हेमजा सेवा केन्द्रका प्रास गुरु अर्यालले भने । शीत भण्डार सञ्चालक दीपक कोईराला लगायतका साझेदारहरुले कृषकसँग आलुको बीउ जिम्मा लिएर प्रर्याप्त चिस्यान कायम गर्न नसक्दा आलुको बीउ कुहिएको कास्कीको लेखनाथका कृषक हरि थापाले वताए । उनले

*बाँकी अन्तिम पृष्ठमा......*

## एन्फा अध्यक्ष थापामाथि फिफाको कार्वाही

**गोल्डेन न्यूज संवाददाता**
**काठमाडौं ३० कार्तिक ।**

अखिल नेपाल फुटबल संघ (एन्फा)का अध्यक्ष गणेश थापालाई फुटबलको सर्वोच्च निकाय फिफाले १० वर्षे प्रतिबन्ध लगाएको छ । हाल राप्रपा नेपालको कोटाबाट सभासद समेत रहेका थापालाई फिफाको नैतिक समितिले सबै खाले फुटबल गतिविधि बाट उनलाई १० वर्ष प्रतिबन्ध लगाएको हो । सन् २०११ मा भएको फिफाको निर्वाचनमा घूस लिएको उनीमाथि आरोप छ भने सोहि अभियोगमा उनीमाथि प्रतिबन्ध लगाइएको हो । डाक्टर कर्नेल बोर्बेलीको अध्यक्षमा रहेको इथिक्स कमिटीको अनुसन्धानकारी कमिटीले विभिन्न अनुसन्धान पश्चात यस्तो निर्णय गर्नका लागि सिफारिस गरेको थियो । थापाले सन् २००९ देखी सन् २०११ सम्म फिफाको कार्यकारी समितिको चुनाव तथा एशियाली फुटबल महासंघको



सम्मेलनमा आचारसंहिता विपरित विभिन्न काम गरेको र पैसा लिएको उक्त कमिटीको ठहर छ । उनले अन्य फुटबल पदाधिकारीलाई प्रलोभनमा पार्नेदेखी अन्य अधिकारीबाट व्यक्तिगत तथा पारिवारिक फाइदा लिएको पनि फिफाले जनाएको छ ।

उनीमाथि फिफाको धारा १३ विपरित सामान्य नीति नियम अनुसार काम नगरेको, धारा १५ विपरित इमानदारिता नदेखाएको, धारा १८ विपरित पारदर्शी, समन्वयकारी र नियमित रिपोर्टिंग नगरेको, धारा १९ विपरित आफ्नो

*बाँकी ३ पृष्ठमा......*

## तिहारमा गर्भपतन गराउने औषधिको बिक्री उच्च

**पोखरा ३० कार्तिक ।**

'भैलोमा रमाइलो गरेर हिँड्दा हिँड्दै यौन सम्पर्क भइहाल्यो, अहिले गर्भ बस्यो कि भनेर टेन्सन भइराखेको छ', रातको नौबजे पोखरा मालेपाटनको औषधि पसलमा एक किशोरीसँगै आएका किशोरले लजाउँदै भने,-'७२ घन्टे चक्की पाइन्छ नि गर्भ फाल्ने, त्यही दिनुहोस्।' औषधि बिक्रेताले औषधि झिकेर दिएपछि आडैमा देउसी भैंलोमा रमाइरहेका साथीहरूले देख्छन् कि भनेर ती किशोरले हतारहतार खल्तीमा हाले र पैसा दिएर भीडमा छिरे।अरू बेला भन्दा तिहार लागेपछि गर्भ रहे नरहेको परीक्षण गर्ने किड्स र गर्भ फाल्ने चक्की अत्याधिक बिक्री भएको व्यवसायीहरू बताउँछन्।

यसका अधिकांश ग्राहक किशोर किशोरी र युवा, युवती रहेको उनीहरूको भनाइ छ ।' तिहारको बेला केटाकेटीहरूसँगै हिँड्ने, नाचगान र रमाइलो गर्ने भएकोले पनि यौन सम्पर्क हुने र गर्भ रहने गरेको पाइन्छ', नेपाल औषधि व्यवसायी महासंघका पूर्वमहासचिव विष्णु भण्डारीले भने,-'त्यसैले तिहारमा गर्भ परीक्षण गर्ने र रहन नदिने औषधिको बिक्री बढी हुन्छ।' कतिपय किशोरकिशोरीसँगै हिँड्दा, नाचगान गर्दा र मोबाइलमा यौन सम्पर्क राखेका तस्बिर तथा फिल्म हेरेर र उत्तेजित हुँदै एकअर्काप्रति आकर्षित हुँदा सम्बन्ध राखेको पाइन्छ। औषधि पसलहरूमा गर्भ फाल्ने औषधि सजिलै पाइने भएकोले अधिकांश जोडीले असुरक्षित ढंगले यौन सम्बन्ध राख्ने र गर्भ रहेको शंका हुनासाथ औषधि किनेर खाने गरेको पाइन्छ।

'बच्चाले चकलेट मागेजसरी औषधि किनेर खान्छन्', महेन्द्रपुलका एक औषधि व्यवसायीले भने, 'स्कुलदेखि क्याम्पस पढ्ने र विभिन्न पेसाका महिला पुरुष गर्भ फाल्ने औषधि किन्न आउँछन् । पहिलाभन्दा तिहार सुरु भएपछि धेरैले यस्तो औषधि किनेर लगेका छन्।'

कहिलेकाही झुक्किएर गर्भ रहेमा रोक्न प्रयोग गरिने औषधि पटकपटक प्रयोग गरेमा स्वास्थ्यमा गम्भीर असर पर्नसक्छ। कन्डमबिना जो कोहीसँग असुरक्षित यौन सम्पर्क राख्दा स्वास्थ्यमा गम्भीर समस्या देखिनुका साथै यौनरोग र एचआईभी संक्रमणको खतरा निकै बढ्ने स्वास्थ्यकर्मीले बताएको पत्रकार प्रेम नेपालीले अन्नपूर्ण पोष्ट दैनिकमा लेखेका छन् ।

'गर्भ बस्न नदिने औषधिको लगातार प्रयोगले अनेक समस्या उत्पन्न हुनसक्ने भएकोले सचेत हुनु जरुरी छ', पश्चिमाञ्चल क्षेत्रीय अस्पताल पोखराका स्त्री तथा प्रसूति रोग विशेषज्ञ डा. प्रेम पंगेनीले भने, 'चक्कीको मात्र भर परेर कन्डम प्रयोग नगर्दा यौनरोग, एचआईभी संक्रमित हुने खतरा हुन्छ । यसले बाँझोपनसमेत ल्याउन सक्छ ।'

उनले गर्भ फाल्ने औषधिले हर्मोन र महिनावारी गडबडी हुने, अत्याधिक रक्तस्राव हुने, कहिलेकहीँ गर्भ नजाँदा अपाङ बच्चा जन्मने लगायतका समस्या देखिनसक्ने बताए। आफूखुसी जथाभावी औषधि नखान उनले सुझाब दिए।यौन सम्पर्क गरेको ४८, ७२ र १२५ घन्टाभित्र खाने चक्की र गर्भपतन गराउने मेडाबोन, मिस्टोलुहरूको मूल्य पसलैपिच्छे फरक छ।

कतिपय व्यवसायीले ग्राहक हेरेर रकम असुल्ने गरेका छन्। यस्ता औषधिहरू तालिम लिएका र दर्ता गरेका स्वास्थ्यकर्मीले मात्रै बेच्न पाउने भए पनि धेरैतिर पाइन्छ। असुरक्षित गर्भपतनले योनी तथा पाठेघरको गम्भीर संक्रमण, बाँझोपना, रक्तअल्पता, शारीरिक कमजोरीलगायतका समस्या निम्त्याउने स्वास्थ्यकर्मी बताउँछन्।

कुनैबेला अवस्था जटिल भएर ज्यान जानसक्ने उनीहरूको चेतावनी छ। उच्च रक्तचाप, न्यून रक्तचाप, जन्डिस, शल्यक्रिया गरेर बच्चा जन्माएका, कलिलो र बढी उमेरकाले यस्ता औषधि सेवन गर्न हुँदैन।

## उत्तमचोकबाट दश जना जुवाडे पक्राउ

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

पोखराबाट झण्डै ९० हजार रुपैयाँ नगद सहित जुवा खेल्दै गरेका १० जनालाई प्रहरीले पक्राउ गरेको छ । पोखरा १० उत्तम चोक स्थित कृष्ण गुरुङको घरमा जुवा खेल्दै गरेका १० जनालाई ८९ हजार ९ सय ६५ रुपैयाँ सहित पक्राउ गरिएको प्रहरी निरीक्षक वेद प्रकाश जोशीले जानकारी दिए । कृष्ण गुरुङको घरमा भाडामा बस्ने जमान गुरुङले अवैधरुपमा जुवातास खेलाएको सूचनाको आधारमा वडा प्रहरी कार्यालय रामबजारबाट खटिएको प्रहरी टोलीले उनीहरुलाई नियन्त्रणमा लिएको हो । उनीहरुको साथबाट ४ बुक तास, ६ थान पासा र १७ थान कौडा समेत बरामत गरिएको प्रहरीले जनाएको छ । उनिहरुलाई जिल्ला प्रहरी कार्यालय कास्कीमा राखेर आवश्यक अनुसन्धान भैरहेको प्रहरीले जनाएको छ ।









■ अविरल असफलता बाहेक अरू सबै कुरा सहन सकिन्छ ।

- गेटो

## सम्पादकीय . .

# संकट समाधानमा लागौं

२०७२ सालको आधा वर्ष बितेको छ तर यो बीचमा देशले ठूला-ठूला दुईवटा संकट बेहोर्नुपरेको छ। महाभूकम्प र नाकाबन्दीले सिर्जना गरेको संकटसंग नेपाल एकैसाथ जुध्नु परिरहेको छ। यी नेपाली इतिहासकै नवीन संकट नभए पनि अहिलेको पुस्ताले भोग्नुपरेका नयाँ संकट नै हुन्। वर्षारम्भमै देशले भूकम्पको ठूलो धक्का बेहोर्नुपर्‍यो। बैशाख १२ र १३ गतेको महाभूकम्प अनि पटक-पटकका परकम्पनका कारण देशले ठूलो क्षति बेहोर्नुपर्‍र्यो। आठ हजारभन्दा बढीको ज्यान गयो भने हजारौं घाइते र लाखौं घरवारविहीन भए। महाभूकम्पलगत्तै देशभित्र मात्र होइन विश्व समुदायको ध्यान नेपालमा केन्द्रित भयो। भूकम्पबाट बढी प्रभावित १४ जिल्लामा देश विदेशको ध्यान केन्द्रित भयो। जताततै राहत संकलनदेखि स्वयंसेवाका काम पनि भए। विभिन्न देशबाट राहत घोषणा हुने क्रम प्रतिष्पर्धाकै रुपमा अघि बढ्यो। सरकारले केही समय तदारुकताका साथ उद्धार, राहत र पुनर्स्थापनाको काम अघि बढायो। तर यसलाई निरन्तरता दिन भने सकेन। अन्तर्राष्ट्रिय दाता सम्मेलन गर्दासम्म नेपालको तदारुकता मननीय थियो तर त्यसयता पुनर्निर्माणको काम ठप्पप्रायः छ। एउटा संकट आउँदा अर्को संकट बिर्सने नेपालको बानी नै बनिसकेको छ। पछिल्लोपटक भारतले नाकाबन्दी गरेपछि सिंगो मुलुक नाकाबन्दीकै वरिपरि हराएको छ र पुनर्निर्माणको काम ओझेलमा परेको छ। नाकाबन्दीबाट परेको संकट समाधान गर्नु अहिलेको प्राथमिकता हो तर पुनर्निर्माणको काम पनि छाड्नुहुँदैन। अहिले एकातिर पुनर्निर्माणको काम अघि बढाउन कानुनी जटिलता थपिएको छ भने अर्कोतिर सहयोग घोषणा गरेका दातृ राष्ट्रहरुले सहयोग फिर्ता लैजाने चेतावनी दिइरहेका छन्। अघिल्लो सरकारले पुनर्निर्माण गर्न अध्यादेशमार्फत पुनर्निर्माण प्राधिकरण गठन गरेको थियो तर उक्त अध्यादेशको समयावधि सकिएपछि कानुनी जटिलता सिर्जना भएको छ। पहिलो कुरा त संसद अधिवेशन शुरु हुने दिनमै तत्कालिन सरकारले अध्यादेश जारी गर्नु सान्दर्भिक थिएन। दाता सम्मेलनअघि नै प्राधिकरण गठन गर्दा दाताहरुलाई प्रभावित गर्न सकिने चलाखीसहित अध्यादेश जारी गरिएको थियो, जुन अस्वाभाविक थिएन। तर अस्वाभाविक र असान्दर्भिक यतिबेला भयो, जतिबेला संसद चलेपछि अध्यादेश पारित गर्ने प्रयत्न समेत गरिएन। भन्नलाई जे भने पनि यो तत्कालीन सरकारको चरम लापर्वाहीको परिणाम थियो। विपक्षी र सत्तापक्षबाट बिरोध हुने अनुमानमा अध्यादेश संसदमा पेश गरिएन, जुन ठूलो कमजोरी थियो। जसले गर्दा अहिले पुनर्निर्माण कार्य अलपत्र मात्र परेको छैन, यसमा कानूनी जटिलतासमेत सिर्जना भएको छ। दाताहरुलाई आश्वस्त पार्न अध्यादेश जारी र प्राधिकरण गठन गरिए पनि त्यसलाई दिगो बनाउन नसक्दा दाताहरुलाई झुक्याउन मात्र यसो गरिएको अर्थ विदेशी दाताहरुले लगाउन थालेका छन्। जसले गर्दा अहिले दाताहरुले सहयोग अन्य संकटग्रस्त देशमा पठाउने बताउन थालेका छन्। दाताहरुले झण्डै चार खर्बको सहयोग दिने घोषणा गरिसकेका छन् तर पुनर्निर्माणको काम अघि बढ्न नसक्दा यो सहयोग पनि अलपत्र परेको छ। पुनर्निर्माणको काम अघि बढेन र सहयोग फिर्ता हुने स्थिति आयो भने त्योभन्दा बिडम्बना अरु केही हुने छैन। त्यसका लागि सबैभन्दा पहिले पुनर्निर्माण प्राधिकरण विधेयक तत्काल संसदमा पेश गरेर पारित गर्न जरुरी छ। संसदको विधायन समितिले तयार पारिसकेकाले यो चाँडै पारित हुनसक्छ। त्यसका लागि सरकार र विपक्षी दलहरु जिम्मेवारीका साथ प्रस्तुत हुन आवश्यक छ। यसलाई फाष्ट-ट्र्याकबाट अघि बढाएर भए पनि चाँडोभन्दा चाँडो पारित गर्नुपर्छ। संसदबाट विधेयक पारित भएलगत्तै प्राधिकरण गठन गरेर पुनर्निर्माणको काम युद्धस्तरमा अघि बढाउन आवश्यक छ। सरकार र नेताहरुले पुनर्निर्माण र नवनिर्माणको कुरा धेरै गरे पनि काम सिन्कोसमेत भाचिएको छैन। भूकम्पलाई नवनिर्माणमा बदल्ने नेताहरुको प्रतिबद्धता अहिले त्यत्तिकै सेलाएको छ। यसलाई यथार्थमा बदल्न र भूकम्पका कारण अहिले पनि खुला पालमुनि जीवन बिताइरहेका लाखौं पीडितहरुको घाउमा मल्हम लगाउन ओझेलमा परेको पुनर्निर्माणको काम शीघ्ररुपमा अघि बढाउन जरुरी छ।

## आजको पञ्चाङ्ग

**मिति २०७२ साल मंसिर १ गते मंगलबार, तदनुसार नवेम्वर १७ सन् २०१५, श्रीशाके १९३७, नेपाल संवत् ११३६, कीलकनामकः संवत्सरः, सूर्य पृथ्वीको दक्षिणी गोलार्द्धमा प्रवेश गरिसकेका छन्। शरद ऋतु चलिरहेको छ। चान्द्रमान अनुसार कार्तिकशुक्लपक्ष चलिरहेको छ। सौरमान अनुसार आज कार्तिकशुक्लपक्षको षष्ठी तिथि ४४ घटि ३१ पला अर्थात रातिमा १२ बजेर १४ मिनेटसम्म त्यसउप्रान्त सप्तमी तिथि लाग्नेछ। आज सूर्य तुला राशिमा, चन्द्रमा धनु राशिमा अहोरात्र रहनेछ। आज दिनमान २६ घटि ५२ पलाको रहनेछ। आज सूर्योदय नेपालको काठमाडौं केन्द्रबिन्दुमा रहि बिहान ठीक ६ बजेर २५ मिनेटमा जयदेव मुहूर्तमा हुनेछ भने सूर्यास्त साझ ५ बजेर ०९ मिनेटमा हुनेछ।**

## आजको राशिफल

**मेष** : पारिवारिक जमघट बढ्ने, राजनैतिक क्षेत्रमा सफलता, गरेको प्रयास सार्थक रहनेछ दिन शुभ छ उपयोग गर्नुहोला।

**वृष** : यशकृति बढ्ने, शतुमाथि विजय हासिल, घरमा नयाँ मान्छेको आगामन हुनेछ, दिन सुखद् बित्नेछ।

**मिथुन** : गर्न खोजेको काम विफल हुनेछन, मनमा अशान्ति छाउने, स्वास्थ्यमा एक्कासी गडबढी आउन सक्नेछ सर्तक हुनुहोला।

**कर्कट** : विरोधीहरू सक्रिय हुनेछन्, अपजस आईलाग्ने, अनाश्यक टकराव खेप्नु पर्ने दिन शुभ छैन चनाखो रहनुहोला।

**सिंह** : सबै क्षेत्रबाट लाभ पाइन सक्ने, आर्थिक समस्याको समाधान हुने, नविन कार्यको थालनी गर्दा राम्रो, दिन शुभ रहेको छ।

**कन्या** : आटेजति काम गर्न असफल, अफन्तबाट विरोध आउनेछ, व्यापारमा मन्दी आउने, दिन सामान्य रहेको छ।

**तुला** : आफन्तजनसंग मनमुटाव हुन सक्ला, मन चञ्चल रहने, पेटवा कम्मरको रोग लाग्ने, चिन्ता पर्ने खवर प्राप्त होला।

**वृश्चिक** : मानसिक पीडा थपिने, मानहानी, आफन्तबाट धोका हुन सक्ने, आम्दानीका श्रोतहरू घट्नेछन् नआतिनु होला।

**धनु** : टाढाबाट धन प्राप्त हुन सक्नेछ, प्रियतम भ्टघाट हुनेछ, धार्मिक क्षेत्रबाट लाभ पाइनेछ, स्वास्थ्य राम्रो रहेछ।

**मकर** : नयाँ ठाँउमा जाँदा आदरसत्कार पाइने, नयाँ क्षेत्रमा गरेको लगानीबाट मनग्य आम्दानी, दिन अत्यन्त राम्रो छ ।

**कुम्भ** : सरकारी कार्य असफल हुन सक्छ, मुद्दा मामिलामा हात नहाल्नुहोला, इज्जतमा आँच आउन सक्नेछ।

**मीन** : चोटपटकको भय, टाढाको यात्रा असफल हुनेछ जोगिनुहोला, नास्तिक विचारले सताउनेछ, समय खराव रहेको छ।

राशिफल लेखक : युवा ज्योतिषी हरि पन्त, मो.९८४६१४७३६९

# आन्दोलन विरुद्ध सशक्त आन्दोलन आवश्यक



✍ विष्णु अधिकारी

नेपालमा जारी संविधान २०७२ पछिको अवस्था र मधेश आन्दोलनको नियतिले आज समग्र राष्टको अर्थतन्त्र ध्वस्त हुँदै गएको छ भने दैनिक उपभोग्य सामानदेखि औषधि इन्धन ग्यास लगायतको अभावमा आम जनताको जनजीवन नराम्रोसँग प्रभावित भएको छ। संसारको २९ औ संघीय राज्यको रुपमा स्थापित हुन लागेको हाम्रो मुलुकमा संघीय संविधान जारी हुनु केही दिन अगाडिदेखि सीमानाको सवाललाई लिएर तराइ मधेशमा बस्ने केही मधेशवादी हौ भन्ने व्यक्तिहरुले सञ्चालन गरेको आन्दोलन तीन महिना नाघिसकेको छ भने सोही आन्दोलनलाइ राज्यपक्षले बेवास्ता गरेको भनेर देशको अन्तर्राष्ट्रिय सीमानाका नजिकको दशगजा क्षेत्रमा बसेर धर्ना दिएको पनि २ महिना हुन लाग्यो। यो बीचमा मधेश र पहाडको मात्र कुरा हैन सिंगो मुलुकलाई नै ध्वंश बनाउने, असफल राष्ट्र बनाउन उद्यत हुने मधेशका मसियाहरुलाई छिमेकी राष्ट्रको प्रत्यक्ष सहयोग रहेको तथ्यहरु सबैका सामु छर्लङ्ग भैसकेको छ।

नेपालको सीमाक्षेत्र तीनतर्फ भारतवेष्ठिक छ भने एकतर्फ हिमालय पर्वत श्रृंखला र तिब्बत छ तर तिब्बत हुँदै चीनको सीमा नाकामा अन्तर्राष्ट्रिय नियम कानुन अनुसार प्रवेश गर्नुपर्ने ब्यवस्था हुनु र समथर भूमि तीनतर्फ घेरिएको मधेश क्षेत्र संबेदनशील हुँदाहुँदै पनि खुल्ला राखिएको र नेपाल-भारत बीच रोटी र बेटीको सम्बन्ध सदिऔं पुरानो र परम्परा भएको भन्ने मान्यतामा निर्बाध आवत-जावत भएको अवस्थाले गर्दा नेपालको औसत जनसख्या भन्दा तेब्बर भारतीय नागरिकहरु ब्यापार ब्यबसायको नाममा नेपालमा आएर बसोबास गर्न सहज भयो जसले आज खुटटाको कुर्कुच्चा टेकेर पैतालो रिगाउने उद्देश्य लिएर नेपाल प्रबेश गरेको जस्तै क्रमशः आफ्नो घनत्वको हिसाबमा संगठित हुँदै राजनीतिक अधिकारका लागि अगाडि बढेको अवस्था हो।

यसो त २००७ सालमा राणा शासकहरुबाट राजपरिवार भारतको दिल्लीमा शरण लिन गएदेखि देशमा कुनैपनि राजनीतिक, आर्थिक वा सामाजिक सांस्कृतिक परिवर्तनमा वा आन्दोलनबाट आफ्नो हठ पुरा गराउनका लागि दिल्लीको शरणमा जाने परम्पराको परिणाम आजको यो अलस्था हो। इतिहास साक्षी छ, आज जो सत्तामा रहे भएपनि विगतमा राज्य सञ्चालकहरुद्वारा अपनाइएका राष्ट हित बिपरीतका कदम र देशको सीमाक्षेत्रको संबेदनशिलतालाई अन्तर्राष्ट्रिय कानुन अनुसार नगरी सार्बभौमसत्तालाई कमजोर बनाउने काम भएकोले समयमा नै राज्य सचेत नहुँदाको परिणाम आज हामीले यो दूर्दशा भोग्नुपरेको छ।

हाम्रो देश मात्र यस्तो देश हो जहा ६५ बर्षको अवधिमा ७ वटा संविधान बनेका छन् र यी सात वटा संविधान बनाउने नाममा विदेशी तथा भारतीय हित र स्वार्थमा कति आन्दोलनहरु भए कति सशस्त्र बिद्रोह समेत भए तर जनताको नाममा भए गरिएका ती बिद्रोह र आन्दोलनहरुमा हामी आम नागरीकको हित र स्वार्थ भन्दा भारतीय स्वार्थको परिधिभित्र रहेर भएका थिए र यतिबेला पनि मधेशी मसियाहरुले त्यही सिको गरेको यथार्थतालाई अबको पुस्ताले भण्डाफोर गर्नेपर्छ।

संबिधान गतिशील दस्तावेज हो तापनि सबै जसो अधिकार स्थापित भैसकेका छन् मात्र केही जिल्लाको सीमाङ्कनलाई इस्यु बनाएर सारा राष्ट्रलाई नै असफलता तर्फ धकेलेर ध्वंस गर्ने नियतबाट सञ्चालित मधेश आन्दोलनलाइ कुनैपनि रुपमा स्वीकार गर्न सकिने अबस्था छैन तथापि अधिकार माग्ने वा खोज्ने बहानामा राष्ट्रको सीमाक्षेत्र त नाघेकै थिए आन्दोलनको सीमा र आफू पनि यो देशको नागरिक भएकोले आफ्ना पनि केही कर्तब्यहरु हुन्छन भन्ने कुराको ख्याल नगरी गरिएको नाकाबन्दले जनताले जुन शास्ती पाएका छन दशगजामा बसेर आन्दोलन हाक्ने, अबसर पाए देशै हाक्ने नेताहरुले आफ्नो कर्तब्य र राष्ट्रको स्वाभीमानलाई भुलेर देशलाइ नै भड्खालोमा हाल्नेकाम जो भएको छ यसले भोलीको भबिष्य थप अन्धकारमय बनाएको छ। अब नयाँ नेपाल निर्माणको यो अभियान संघीयता नै अफाब र असान्दर्भिक भएको पो हो की भन्ने अबस्था देखिएको छ।

आन्दोलनकारी मोर्चाहरुसँग पटक-पटकका वार्ताहरुमा एउटै कुरा दोहोर्‍याउनु र सीमानाको बटमलाइन जनसख्याको बटम लाइन जस्ता बिषयको मध्यबिन्दु खोज्नु र देश र जनता त आफ्नै हुन जनताको अधिकार कहा खोसिएको छ वा समग्रतामा सबैलाइ मान्य हुने विकल्प के हुन्छ भन्नेतर्फ चिन्तन मनन गर्न नखोज्ने नगर्ने किनकी भारतीय राजदूताबास मा विगतमा गरेको सहमति हुबहु संविधानमा उल्लेख हुनुपर्छ वा संशोधन गरिनुपर्छ भन्ने बिषयले मधेशी नेताहरुलाई नेपाल र नेपालीप्रतिको दायित्वबोध छैन भन्ने प्रष्ट गर्दछ। तर सत्तामा बसेपछि सबै घुम्ने मेचमाथिको अन्धो मान्छे नै हुँदा रहेछन कि कुन्नी, समस्या एकातर्फ छ विकल्पको औषधि अस्थायी प्रकृतिको खोजिन्छ जसले गर्दा कहिल्यै पनि समस्याको निराकरण हुँदै हुँदैन र पटक-पटक खिल बनेर बल्झिरहन्छ जुन बिगतमा गरिएको अदूरदर्शी सहमतिको परिणाम महिनौं नाकाबन्दीको सकस ब्यहोर्नु परेको छ। अब यी आन्दोलनकारीहरु यै देशका नागरिक हुन भने राष्ट्रका लागि त्याग र बलिदानी स्वरुप जनतामा परेको सकस समाधान तर्फ लाग्छन होइन यिनीहरु भारतकै भतुवा हुन र जनताप्रतिको दायित्व र जिम्मेवारीलाई गौण ठान्छन भने हामी सबै बीरगञ्ज जाऔं आन्दोलन शुरु गरौं र छिटो मुलुकमा वार कि पारको अवस्था सृजना गरौं।

अब सहेर बस्ने सीमा नाघिसकेको छ। औषधि पनि खान नपाउने हामी निरीह जनताले कस्को अधिकार खोसेका छौं ? किन विदेशबाट आएका औषधिका गाडीहरु पनि प्रबेश गर्न नसक्ने अबस्थाको सृजना भैरहेको छ देशमा। इन्धन र खाद्यान्न समेतको चरम अभावमा आम नागरिकहरु कतिञ्जेल चुप लागेर बस्ने हो आत्मनिर्भर हुने भन्ने कुरा आजको आजै बोल्दा-बोल्दै हुने होइन आत्मनिर्भर हुने बेलासम्म त बाँच्नु पर्‍यो कि परेन ०४६ सालदेखी राजनीतिको अग्रभूमिकामा रहेका नेताहरुले पञ्चायतकालमा स्थापना गरिएका सबै उद्योग धन्दाहरु लिलाम गरेर युवा जनशक्तिलाई अरबको खाडीमा पुर्‍याएको सम्झिंदा हाम्रै नेताहरुको विकल्प खोज्नुपर्ने बेला भएको छ अझैपनि ति नेताहरुलाई देशको यो दुर्दशा हामीले बनाएको हो भन्नेमा आत्मग्लानी पटक्कै छैन अनि फेरि यतिबेला भन्छन् अब आत्म निर्भर हुनुपर्छ कस्तो बिडम्बनाका बीच हामीले हाम्रा नेताहरुलाई जे गरेपनि चुपचाप बसेको परिणति आज हामीले भोगेका छौं जति अभाब र उत्पिडन छ हामीलाई मात्रै छ नेताका चुल्हा जलेकै छन, उपचार विदेशमा गएर गराएकै छन् पहुँचवालाहरुलाई के-को अभाव छ र हामी सर्बसाधारण र निरीह जनतालाई पो मधेश आन्दोलनले सकस पारेको छ। यसर्थ अब हामी बीरगञ्ज जाऔं अभियान आन्दोलन शुरु गरौं।

# गणेश थापा मुछिएका फुटबल काण्डहरु

**काठमाडौं ३० कार्तिक ।**

लामो समयसम्म एन्फामा एकछत्र राज गरेका गणेश थापालाई सोमबार फिफाले आर्थिक जरिवानासहित १० वर्ष राष्ट्रिय र अन्तर्राष्ट्रिय फुटबल गतिविधिमा प्रतिबन्ध लगाएको छ। फुटबलसँग जोडिएको आर्थिक क्रियाकलापमा पनि उनी विवादमा परेका थिए। उनी विवादित बनेका अन्य केही काण्डहरु निम्नप्रकार छन् :

**१.गोल प्रोजेक्ट (पहिलो)**

अखिल नेपाल फुटबल संघ (एन्फा) ले सञ्चालन गरेको 'गोल प्रोजेक्ट'मा अन्तराष्ट्रिय अनुदानको रकम व्यक्तिगत खातामा लुकाउने र शंकास्पद ढंगले खर्च गरेको आरोप उनीमाथि लागेको थियो। अन्तर्राष्ट्रिय फुटबल महासंघ (फिफा) ले चार चरणमा कार्यक्रम सञ्चालनको लागि १८ लाख डलर नेपाल पठाएको थियो। सन् २००१ देखि २०१२ सम्म सञ्चालित कार्यक्रमबाट तत्कालीन विनियम दरअनुसार करिब १७ करोड ४८ लाख रुपैंया खर्च भएको हो। सबैजसो बजेट एन्फाका अध्यक्ष गणेश थापा र उनी निकट पदाधिकारीहरुको मिलेमतोमा खर्च भएको थियो। गोप्य रुपमा सञ्चालित आयोजनाबारे एन्फाकै अधिकांश पदाधिकारीहरु लामो समयसम्म बेखवर थिए।

गणेश थापाको नीजि खातामा नै रकम राख्ने र परिचालन गर्ने गरिएको थियो। नेपालको फुटबल विकासमा योगदान पुगोस् भनेर फिफाले एन्फामार्फत् भौतिक निर्माण, क्षमता विकासलगायतका क्षेत्रमा खर्च हुने गरि रकम उपलब्ध गराएको थियो। फिफा अध्यक्ष सेप ब्लाटरले विकासोन्मूख मुलुकहरुमा फुटबल विकास गर्ने महत्वकांक्षी कायक्रम 'गोल' सन् १९९९ मा सुरु गरेका थिए। त्यसअन्तर्गत् फिफाले १ सय ९३ देशमा ५ सय प्रोजेक्टमा २० करोड डलर लगानी गरिसकेको छ र त्यसमध्ये १८ लाख डलर नेपाल भित्रिएको हो।

एन्फाका निलम्बित अध्यक्ष गणेश थापालगायत केही पदाधिकारीहरुले गोल प्रोजेक्टबारे नियमनकारी निकायहरुमा झुटो विवरण पेश गरेको प्रमाण फेला परेको थियो। संसदको लेखा समिति, युवा तथा खेलकुद मन्त्रालय लगायतमा उनीहरुले गोल प्रोजेक्टका लागि फिफाबाट सोझै रकम परिचालन भएको र त्यसमा एन्फाको कुनै भूमिका नभएको दावी गरेका थिए। तर एन्फाको लेखासम्बद्ध स्रोतले कान्तिपुरलाई उपलब्ध गराएको कागजातमा एन्फाले नै रकम परिचालन गरेको पुष्टि भएको थियो। एन्फाको लेखा स्रोतबाट प्राप्त बुटबल नगरपालिका सँगको करार सम्झौतापत्रमा गोल प्रोजेक्ट सञ्चालनमा फिफा प्रत्यक्ष संलग्न थिएन भन्ने देखिन्छ। बुटबल नगरपालिका पहिलो र एन्फा दोस्रो पक्ष बनेर उक्त सम्झौता गरेका थिए।

**२.गोल प्रोजेक्ट (दोस्रो, तेस्रो र चौथो)**

विश्व फुटबल महासंघ (फिफा)को सहयोगमा सञ्चालित गोल प्रोजेक्टको दोस्रो, तेस्रो र चौथो कार्यक्रमको योजना स्विकृति, भुक्तानीलगायतमा नियम मिचेको भेटिएको थियो। सन् २०१० को अक्टोबलमा सुरु भएको गोल-३ कार्यक्रममा तीन ठाँउको फुटबल एकेडेमीहरुको सशक्तिकरणका लागि ४ लाख डलर सहयोग आएको थियो। काठमाण्डौं, धरान र बुटबलका फुटबल एकेडेमीहरुहरु को शसक्तिकरणका लागि थप एक करोडसहित कूल ५ लाख डलर सहयोग आएको स्रोतले बतायो। १२, १४ र १६ वर्षमुनीका तीन समूहका लागि २०/२० जनाको दरले तीन ठाँउमा कुल १ सय ८० फुटबल प्रशिक्षार्थीलाई आवाशिय प्रशिक्षण दिन योजना सञ्चालन गरिएको फिफाको बेवसाइटमा उल्लेख छ। तर एन्फाको लेखासम्बद्ध स्रोतका अनुसार, गोल-३ सञ्चालनका बेलामा धरान, काठमाडौं र बुटबलमा गरी ६५ जना विद्यार्थीले मात्रै प्रशिक्षण पाएका थिए। तीन वर्षको अवधिमा धरानमा एन्फाबाट ४४ लाख रुपैंयामात्रै उपलब्ध गराएको कागजात स्रोतले कान्तिपुरलाई उपलब्ध गराएको छ। त्यसैगरी एन्फा टेक्निकल सेन्टर बुटबलमा पनि तीन वर्षको अवधिमा ४४ लाख नै निकासा भएको छ। काठमाडौंमा प्रशिक्षण सञ्चालन गरेको भेटिएपनि त्यसको कुनैपनि विवरण एन्फामा छैन।

**३.आर्थिक क्रियाकलापमा मनोमानी**

अनियमितता र भ्रष्टाचारका कारण छानविनमा परेको अखिल नेपाल फुटबल संघ(एन्फा)मा वर्षौदेखि लेखाको नियम र मापदण्ड विपरीत आर्थिक गतिविधि भइरहेको थियो। केही पदाधिकारीहरुको क्रियाकलापका कारण एन्फाले आर्थिक निर्णय, खाता सञ्चालन, भुक्तानीलगायतका नियमको पालना नगरेको हो। खेलकुद परिषद स्रोतबाट कान्तिपुरलाई प्राप्त विवरण अनुसार कम्तिमा दुई दशकदेखि एन्फाको आर्थिक क्रियाकलाप पारदर्शी नभएको देखिन्छ। स्रोतका अनुसार, २०५२ सालमै अध्यक्षलाई असिमीत अधिकारबाट बञ्चित गर्न कार्यसमितिका केही पदाधिकारीहरु ले नयाँ ढंगको प्रस्ताव ल्याएका थिए एक पटकमा २५ हजार रुपैंया सम्म मात्रै खर्च गर्ने अधिकार दिइयो। तर पछि उक्त निर्णय व्यवहारमा लागू हुन सकेन। 'सानो रकमको कारोवारमा कार्यकारी समितिबाट निर्णय गराउने, तर ठूलो रकममा भने मनोमानी निर्णय गरेको भेटियो' स्रोतले भन्यो।

एन्फाको विधान अनुसार, अध्यक्ष र कोषाध्यक्षको अनिवार्य हस्ताक्षरबाट मात्रै खाता सञ्चालन हुनुपर्ने नियम छ। तर २०५३ असार १५ को निर्णय भन्दै गणेश थापाले अध्यक्ष अनिवार्य त्यसमा महासचिव वा कोषाध्यक्ष एकको हस्ताक्षरबाट खाता सञ्चालन गर्न सकिने निर्णय गरे। एन्फाका असन्तुष्ट पदाधिकारीहरुका अनुसार, त्यही निर्णयलाई आधार देखाएर अध्यक्षले मनोमानी आर्थिक निर्णयहरु गरेका थिए।

**४. छानविनले अनियमितता औल्याएको थियो**

उपसचिव रामबहादुर थापाको संयोजकत्वमा युवा तथा खेलकुद मन्त्रालयले गत असारमा गठन गरेको छानविन समितिले पनि सार्वजनिक प्रतिस्पर्धा, पारिश्रमिकको कर दाखिला, बैंक खाता लगायतका विषयमा आर्थिक पारदर्शिता नभएको भनी थप छानविन गरी कारवाहीको सिफारिस गरेको थियो। उक्त समितिले एन्फाको खाताबाट व्यक्तिगत खातामा रकम सारिएकोवारे राष्ट्रबैंकमार्फत थप छानविनको सिफारिस हालसम्म कार्यान्वयन हुन सकेको थिएन।

**५. लेखापरीक्षण नै शंकास्पद**

इकान्तिपुरले उल्लेख गरे अनुसार अखिल नेपाल फूटबल संघ(एन्फा)को विगतका लेखापरिक्षण समेत शंकास्पद छन। एन्फा भित्रको आर्थिक अनुशासनको अध्ययन गर्ने र अनियमितता भेटिए औल्याउनुपर्ने दायित्व भएका लेखापरीक्षकहरुले केवल औपचारिकता पूरा प्रतिवेदन तयार गरेका थिए। करिव एक दशकयताका लेखापरीक्षण प्रतिवेदनहरु औपचारिकतामा सीमित भएको राष्ट्रिय खेलकुद परिषदको लेखासम्बद्ध स्रोतले बतायो। २०६६/६७ देखि ६८/६९ सालसम्म रजिष्टर्ड लेखापरिक्षक सरस्वती श्रेष्ठले एन्फाको लेखापरिक्षण गरेकी थिइन्। तीनवटा लेखापरिक्षण प्रतिवेदनको व्यहोरामा एक वाक्यमात्रै फरक छ भने बाकी हुबहु मिलेको देखिन्छ। प्रतिवेदनमा लेखा परिक्षणमा देखिएका टिप्पणी र कैफियत सयै प्रतिवेदनसाथ संलग्न गरेको भन्ने व्यहोरा भएपनि त्यसको विवरण लुकाइएको छ।

## राहदानी हरायो

**मिति २०७२/०७/०३ गते गोरखाबाट पोखरा आउने क्रममा निम्न व्यहोरा भएको राहदानी हराएको हुँदा फेला पार्नुहुने महानुभावले नजिकको प्रहरी कार्यालय वा निम्न ठेगानामा सम्पर्क गरिदिनुहुन अनुरोध गर्दछु।**

नाम : **धर्म घले**
ठेगाना : केरौंजा-१, गोरखा
राहदानी.नं. : ०५७८४९८१
सम्पर्क : ९८२५१९१४१९







# पासापुच साउथ इष्ट लण्डनका प्रतिनिधिलाई स्वागत

गोल्डेन न्यूज संवाददाता
पोखरा ३० कार्तिक ।

नेपाल रेडक्रस सोसाइटी उपशाखा १०, ११, पोखरा भ्याली स्पोर्टस् क्लव र रामबजार ताया:मचा: नाच समितिको संयुक्त आयोजनामा पासापुच साउथ इष्ट लण्डन युकेका अध्यक्ष लगायत तथा अन्य अतिथिलाई स्वागत गर्दै दिवा भोज कार्यक्रम सम्पन्न भयो । रामबजार सोसाइटी युकेका सल्लाहकार एवम् समाजसेवी डा.चन्द्र बहादुर गुरुङ्गको प्रमुख आतिथ्यतामा सम्पन्न कार्यक्रममा पासापुच साउथ इष्ट लण्डन युकेका अध्यक्ष र तमु समाज युकेका सल्लाहकार टिका गुरुङ्गलाई क्रमश: रामबजार ताया:मचा: नाचको डिभिडि, क्यालेण्डर, नाच सम्बन्धी जानकारी पत्र र तमु समाज युकेलाई रेडक्रस भवनमा रकम सहयोग गरेवापत सम्मानपत्र र मायाको चिनोले सम्मान गरिएको थियो । कार्यक्रममा प्रमुख अतिथि डा.गुरुङ्गले रामबजार क्षेत्रका



संघसंस्थाहरुको एकआपसको सहकार्य गरी अगाडि बढ्नुपर्ने बताए । उनले संस्थालाई अगाडि बढाउन हरेक महिनामा बैठक राखी आफ्ना विचार राखी निर्णय गराउन अनिवार्य रहेको र त्यस्ता कार्यहरुमा युकेका समाजले सहयोग गर्न तत्पर रहेको स्पष्ट पारे । कार्यक्रममा पासापुच साउथ इष्ट लण्डनका अध्यक्ष चुत्र श्रेष्ठ, रामबजार सोसाइटी युकेका सल्लाहकार महेश गुरुङ्ग, तमु समाज युकेका सल्लाहकार टिका गुरुङ्ग, नेवा:खल कास्कीका अध्यक्ष अशोक पालिखे, नगर महिला समन्वय समितिका अध्यक्ष पवित्रा गुरुङ्ग, रामबजार सोसाइटी युकेका निवर्तमान अध्यक्ष रुपक गुरुङ्ग लगायतले आ-आफ्नो धारणा राख्दै उपशाखाको भवन निर्माण, पोखरा भ्याली स्पोर्टस् क्लवको इलेभेन साइड फुटबल प्रतियोगिता, रामबजार ताया:मचा: नाचको कार्यक्रमलाई आवश्यक अनुसार सहयोग गर्न युकेमा रहेका संस्थाहरुले पहल गर्ने बताउँदै रामबजारबासीहरु एकजुट हुनुपर्नेमा जोड दिएका थिए ।

पोखरा भ्याली स्पोर्टस् क्लवद्वारा आयोजित दोस्रो स्व.अमन गुरुङ्ग सेभेन ए साइड फुटबल प्रतियोगितामा प्रथम पुरस्कार प्रदान गर्ने हङ्गकङ्गका विक्की गुरुङ्ग, दोस्रो पुरस्कार प्रदान गर्ने कोरियाका दिनेश गुरुङ्ग, उपशाखा भवन निर्माण गर्न र ताया:मचा: नाच र पोखरा भ्याली स्पोर्टस्लाई सहयोग गर्ने दुवइ निवासी प्रताप परियार लगायत पूर्व राष्ट्रिय खेलाडी विजय गुरुङ्गलाई सम्मान गरिएको उक्त कार्यक्रममा उपशाखा १०, ११,पोखरा भ्याली स्पोर्टस् क्लव र ताया:मचा:नाच सम्बन्धी चर्चा गर्दै ताया:मचा: नाच युके लैजान पहल भैरहेको संस्थाका सचिव विश्व तण्डुकारले बताए ।

पोखरा भ्याली स्पोर्टस् क्लव रामबजारका कार्यवाहक अध्यक्ष खेम गुरुङ्गले स्वागत गरेको कार्यक्रममा नेपाल रेडक्रस सोसाइटी उपशाखा १०, ११ का सभापति, रामबजार ताया:मचा: नाच समितिका अध्यक्ष एवम् पोखरा भ्याली स्पोर्टस् क्लवका सचिव सम्मरबहादुर श्रेष्ठको सभाध्यक्षमा सम्पन्न कार्यक्रमको संचालन नाच समितिका उपाध्यक्ष नारायण श्रेष्ठले गरेका थिए ।

# देउसी भैलोबाट संकलित रकम टोल विकासलाई

गोल्डेन न्यूज संवाददाता
पोखरा ३० कार्तिक ।

पोखराको रामबजारमा रहेको डेमो चिल्ड्रेन होममा रहेका बालबालिकाहरुले तिहारको अवसरमा देउसी भैलो खेलेर जम्मा गरेको सोही ठाउँस्थित तल्लो जनशक्ति टोल विकास संस्थालाई हस्तान्तरण गरेका छन् । शनिबार आयोजित रकम हस्तान्तरण कार्यक्रममा देउसी भैलो समूहका प्रज्ञा योल्मोले देउसीबाट उठेको रु ९ हजार ५ सय ४५ रुपैंया तल्लो जनशक्ति टोल विकास संस्थाका अध्यक्ष दिपक लोहनीलाई हस्तान्तरण गरे । चिल्ड्रेन होमको अग्रसरतामा ३ दिनसम्म टोलमै खेलिएको रकमबाट जम्मा भएको उक्त रकम हस्तान्तरणका अवसरमा बोल्दै अध्यक्ष लोहनीले बालबालिकाको यो प्रयासलाई निकै सह्रानीय भन्दै प्रशंसा गरे ।

नेपाली रीतिरिवाज, संस्कृति र परम्परालाई निरन्तरता दिई जोगाई राख्न तथा बालगृहमा आश्रित बालबालिकाहरुलाई बाल अधिकार, धार्मिक स्वतन्त्रताको प्रत्याभूति गराउन पनि देउसी भैलो कार्यक्रममा बालबालिकालाई सहभागी गराएको चिल्ड्रेन होमका प्रवन्ध निर्देशक नर्बु योल्मोले जानकारी दिए । साथै जनशक्ति टोललाई बालमैत्री बनाउन सहयोग गर्ने, बाल बालिकालाई सानै उमेरदेखि समाजसेवा प्रति उत्प्रेरित गर्न र भारतले गरेको नाकाबन्दीमा पनि संस्कृति जोगाउन कुनै असर नपारेको सन्देश प्रवाहका लागि पनि देउसी भैलो कार्यक्रम सार्थक भएको योल्मोको धारणा छ ।

रकम हस्तान्तरण कार्यत्रममा जनशक्ति आमा समूहका कोषाध्यक्ष पुष्पा ढकाल, चिल्ड्रेन होममा रहेका तथा तथा देउसी भैलो खेल्ने बालबालिका, थ्रि एन्जल्स रेडियोका समाचार प्रमुख जीवन सुवेदी लगायतको उपस्थिति रहेका थियो ।

# नेविसंघ कास्कीद्वारा ध्यानाकर्षण

पोखरा ३० कार्तिक ।

नेविसंघ जिल्ला समिति कास्कीले पछिल्लो समय कोही व्यक्तिले म नेपाल विद्यार्थी संघको जिल्ला अध्यक्ष हुँ भन्दै हिँडेकोप्रति ध्यानाकर्षण भएको जनाएको छ । संघका कास्की संयोजक सुवास कोइरालाले एक विज्ञप्ति प्रकाशित गरी देश नै यस्तो जटिल परिस्थितिमा हुँदाको मौका उठाएर आर्थिक चलखेल गर्न खोजेको यस्तो अनैतिक कार्यप्रति नेविसंघ कास्कीको गम्भीर ध्यानाकर्षण भएको छ । साथै विज्ञप्तिमा संगठनका नाममा चन्दा उठाउने प्रवृत्तिका केही व्यक्तिहरुको विरुद्ध हामी बारम्बार सबैमा हासियारी गराउँदै आएको सबैमा सर्वविधितै छ । आगामी दिनमा पनि यस्ता गतिविधि रोक्न अग्रसर रहने छौं भन्नेमा सबैलाई विश्वस्त गराउन चाहन्छौं । संघले नेविसंघ लाखौं विद्यार्थीहरुको साझा संगठन हो । कुनै एउटा व्यक्तिको प्राइभेट कम्पनी होइन तसर्थ पुस्तक छाप्छु, कार्यक्रम गर्छु भनि आर्थिक चलखेल गर्न खोज्ने व्यक्तिहरुबाट सतर्क रहन् नेविसंघ कास्की जिल्ला कार्य समिति सम्पूर्ण लोकतन्त्रप्रेमीहरुमा अपिल गरेको छ ।

# कता हराए खै ? दु:खसुखका साथी गन्धर्व दाइ !

धुवप्रसाद शर्मा
म्याग्दी ३० कार्तिक ।

कुनै दिन मुम्बई, गोरखपुर र कलकत्ताका कोठीमा नेपाली चेली बेचिएको, कतै सासूले बुहारी मारेको अनि 'फुक्लान'को टापुमा लड्दालड्दै वीरगति प्राप्त गरेका खबरको बाहक बनेर गाउँघरमा सारङ्गी रेट्ने गाइने दाइ हिजोआज देखिन छाडेका छन् । देश विदेशका घटनालाई लस्के, चाँचरी, मालश्री, मङ्गला, बारामास, सन्देश, धनसिरा, मल्लार, सरुमैरानी, कला खलेनी, असारेलगायतका भाखामा खबर दिँदै घुम्ने गाइने दाइ ( गन्धर्वहरू) लोप हुँदैछन् । सारङ्गीको धुनमा घटनाक्रमलाई सिलसिलेवार रूपमा कलात्मक ढङ्गबाट प्रस्तुत गरिरहँदा चौफेरामा बस्नेको आँखा रसाउँथे । गीत-सङ्गीतको माध्यमबाट सूचना र समाचार बाँड्दै जनतालाई सुसूचित बनाउने गाइने दाइका सारङ्गी हिजोआज गाउँघरमा गुञ्जन छोडेका छन् । सूचना र सञ्चारको पुरानो माध्यम गन्धर्वको पेसा अहिले एकाएक विस्थापित भएको छ । सूचना र सञ्चार प्रविधिमा रेडियो, पत्रपत्रिका, टेलिभिजन, फोन, मोबाइलजस्ता अत्याधुनिक सूचना प्रविधिको विकासले गन्धर्वको पेसालाई विस्थापित बनाएको हो । त्यसैले त गाउँघरमा गाइने खबरमूलक मर्मस्पर्शी हृदयविदारक गीत गुञ्जन छाडेका छन् । गाउँगाउँमा खबर सुनाउँदै हिँड्ने गाइने दाइको अभाव खड्किरहेका बेला पुर्ख्यौली जातीय पेसालाई निरन्तरता दिँदै जीवनयापन गरेका छन् केही गन्धर्वले । गुल्मी जिल्ला गडगाउँ गाविस-५ घरभएका टोपबहादुर गन्धर्वले परम्परागत जातीय पेसाबाट आफ्नो चारजनाको परिवारको गर्जो टार्ने गरेका छन् ।

काँधमा निलो जेब्रा झोला, शिरमा ढाकाटोपी, गलामा सारङ्गी भिरेर म्याग्दी, पर्वत र बागलुङका विभिन्न भागमा घुम्ने टोपबहादुरले दैनिक रु २/३ सय आम्दानी हुने बताउछन् । सूचना र मनोरञ्जनका श्रव्यदृष्य सामग्रीको सुलभ उपलब्धताले सारङ्गीको महत्व ह्वात्तै घटेको छ, टोपबहादुर भन्छन् -"संचार प्रविधिमा भएको विकासले हाम्रो पेसा सङ्कटमा पऱ्यो । सञ्चार माध्यमले सारङ्गीको महत्वलाई उचित स्थान नदिए सारङ्गी नै लोप हुनेछ ।"

"कला संस्कृतिको धनी देशमा मौलिक संस्कृति लोप हुनु राम्रो होइन"- गन्धर्वले भन्छन् -"यसको संरक्षण र संवर्द्धनमा सबैले ध्यान दिनुपर्छ ।"नेपाली संस्कृतिको महत्व र वीरताको गाथा बोकेको सारङ्गीलाई आधुनिकीकरण गरी व्यावसायीकरण गर्नुपर्ने आवश्यकता देखिएको छ । साङ्गीतिक कक्षाको पाठ्यक्रममा सारङ्गी बाजालाई समावेश गरे सारङ्गीले जीवन्तता पाउने बुद्धिजीवीहरूको भनाइ रहेको छ । युवा वर्गमा जातीय पेसाप्रति हीनताबोध र वैदेशिक रोजगारको प्रतिस्पर्धाले गन्धर्व पेसा सङ्कटमा पर्दै गएको बताइएको छ । रासस

# एन्फा...

*स्वार्थमा काम गरेको, धारा २० विपरित उपहार तथा अन्य फाइदा लिएको, धारा २१ विपरित भ्रष्टाचार गरेको आरोप छ । प्रतिबन्धसँगै उनीमाथि २० हजार स्विस डलर जरिवाना गर्ने निर्णय पनि फिफाले गरेको छ । दुई दशकअघि नेपाली फुटबलको नेतृत्व गरिरहेका थापालाई यसअघि पनि एएफसीले दुई पटक निलम्बन गरिसकेको छ । थापाको भ्रष्टाचार मुद्धालाई लिएर अख्तियार दुरुपयोग अनुसन्धान आयोग, राष्टिय खेलकुद परिषद् र संसद्को सार्वजनिक लेखा समितिमा उजूरी परेको थियो । संसद्को सार्वजनिक लेखा समितिले एन्फामा भ्रष्टाचार भएको भन्दै त्यसको छानविन गर्न अख्तियार र राष्टिय खेलकुद परिषद्सँग युवा तथा खेलकुद मन्त्रालयलाई पनि पत्राचार गरेको थियो । तर, राज्यका यि तीनवटै निकायले थापाको भ्रष्टाचार मुद्धाका विषयमा झारा टार्ने छानबिन बाहेक केहि गरेनन् । यसैबीच अखिल नेपाल फुटबल संघ एन्फा अध्यक्ष गणेश थापाले फिफाले आफूलाई अन्याय गरेको बताएका छन्। फिफाको कारबाही पछि एक विज्ञप्ति जारी गर्दै उनले आफूलाई निर्दोष सावित गर्नका लागि लड्ने उद्घोष पनि गरेका छन्। 'मैले आज बिहान फिफाको अनुसाशन कमिटीले मलाई १० वर्षका लागि फुटबलबाट प्रतिवन्ध लगाएको जानकारी पाएँ । म एकदमै निराश छु र मलाई यसमा न्याय भएको जस्तो लाग्दैन', उनले जारी गरेको विज्ञप्तिमा भनेका छन्। उनले विज्ञप्तिमा आफूले विगत चार वर्षदेखि फिफालाई अनुसन्धानमा सहयोग गरेको भन्दै आजको निर्णय पछाडिका कारणहरु माग्ने पनि जनाएका छन्। 'सबै विवरण प्राप्त भएपछि आफूलाई निर्दोष सावित गर्नका लागि म फिफाका आवश्यक प्रक्रियाहरु अनुशरण गर्नेछु', उनले विज्ञप्तिमा भनेका छन्-'आवश्यक पऱ्यो मुद्दा पनि हाल्ने छु।'*

# बाच्छा गाउँमै मैनवत्ति उत्पादन

गोल्डेन न्यूज संवाददाता
पर्वत ३० कार्तिक ।

पर्वतको बाच्छाका महिलाहरुले तिहारमा सबैभन्दा बढि खपत हुने मैनवत्ती गाउँमै उत्पादन गर्न सक्षम भएका छन् । महिला सञ्जाल बाच्छाको आयोजनामा तालिम लिएका गाविसका महिलाहरुले मैनवत्ती उत्पादन गरेर यसपालीको तिहारमा गाउँभरिका घरहरु उज्यालो बनाएका छन् । बजार क्षेत्रमा र विजुली पुगेका ठाउँमा झल्लरको प्रयोग भएपनि अहिलेसम्म बिजुली नपुगेको बाच्छामा भने स्थानीय उत्पादन मैनवत्तीले गाउँ झिलिमिली भएको हो । महिला सञ्जालको आयोजनामा भएको तालिममा सहभागीहरुले यसैलाई व्यवसायिक बनाउने सोचका साथ घर घरमा उद्योग नै सञ्चालन गरेका छन् । गएको असारमा सातदिने तालिम लिएका महिलाहरुले गाउँमा उत्पादन गरेको मैनवत्ती बेचेर राम्रो आम्दानी गरेको महिला सञ्जाल वाच्छाकी अध्यक्ष डम्बरकुमारी गुरुङले बताइन । गुरुङका अनुसार गाविसमा जाने लक्षित बर्गको बजेटले महिलाहरुले मैनवत्ती उत्पादन सम्बन्धी तालिम लिएर उद्यमी बनेका हुन् ।

गत असारमा प्रशिक्षक सीता केसी र राष्टिय उपभोक्ता मञ्च पर्वतकी अध्यक्ष सरिता भण्डारी सरुले उनीहरुलाई तालिम दिनुभएको थियो । तालिम लिएर अन्य ठाउँका महिलाहरुले यसरी व्यवहारमा उतारेका थिएनन् । बाच्छा गाविसका महिलाहरुले भने उद्यम नै सञ्चालन गरेपछि गाविस भरिका महिलाहरु तालिम लिएका महिलाहरु संग सीप सिक्न थालेका छन् ।

# हृदयघातबाट नेपालीको साउदीमा मृत्यु

पर्वत ३० कार्तिक ।

रोजगारीका सिलसिलामा साउदी अरब आएका एक नेपालीको हृदयघातका कारण मृत्यु भएको छ । पर्वत थानामौला-२ का २५ वर्षीय सुनिल नेपालीको बिहीबार राति हृदयघातका कारण कोठामा सुतेकै अवस्थामा मृत्यु भएको हो । मृतक नेपाली साउदीको जुबेलस्थित ओल्यान डिस्कोन कम्पनीमा सहायकका रूपमा कार्यरत थिए । कामबाट फर्केर राति खाना खाएर सुतेका नेपालीको रातको १ बजे मृत्यु भएको सोही कम्पनीमा कार्यरत अजय विकेले जानकारी दिए । चार महिनाअघि मात्र विवाहबन्धनमा बाँधिएका नेपाली दुई महिनाअघि 'मिडल इस्ट मेनपावर कम्पनी' मार्फत 'टिटिसी सप्लाई कम्पनी' मा कामदारका रूपमा साउदी अरब आएका थिए । उनको शव जुबेलस्थित सेन्टूल अस्पतालको शव गृहमा राखिएको छ । नेपालीको मृत्यु भएको विषयमा दूतावासलाई जानकारी गराइएको र उनको शव जति सक्दो छिटो स्वदेश पठाउने पहल भइरहेको विकेले बताए । रासस

# कैदीबन्दीका लागि कल्याणकोष

पर्वत ३० कार्तिक ।

पर्वत कारागारमा रहेका कैदीबन्दीका लागि कल्याणकोष स्थापना गरिएको छ । कारागारमा रहेका कैदीबन्दीलाई आयआर्जनका काम गर्न आर्थिक सहायता दिने उद्देश्यले जिल्ला प्रहरी कार्यालयको पहलमा सामुदायीकम सेवा समाज पर्वत मार्फत एक लाख बराबरको कल्याण कोष स्थापना गरिएको हो । सोमबार जिल्ला प्रहरी कार्यालय पर्वतमा भएको अन्तरक्रिया कार्यक्रममा स्थानीय समाज सेवीहरुको सहयोगमा कोष स्थापना गरिएको प्रहरी नायव उपरीक्षक गंगा पन्तले बताएकी थिइन् । कल्याणकोषबाट निश्चित रकम लिएर कैदीबन्दीले कारागारभित्रै उद्यम गर्न सक्ने र त्यसबाट प्राप्त आम्दानीले घरपरिवारलाई समेत सहयोग पुग्ने विश्वास लिइएको प्रहरी नायव उपरीक्षक पन्तले बताइन् । कारागारबाट निस्केपछि पनि जीवनयापनका लागि उपयोगी सीप सिकेर जान सक्ने भएकाले यसलाई संस्थागत रुपमै विकास गर्ने लक्ष्य राखिएको उनको भनाई छ । कैदीबन्दीले बाँसको मुढा, प्लाष्टिकका पेटी, नाम्लो लगायतका सामग्री तयार पार्दै आएका छन् ।

यस्ता सामग्री तयार पार्नका लागि बाँस किन्न समेत पैसाको अभाव हुने भन्दै लामो समयदेखि कैदी बन्दीले कल्याणकोष मार्फत ऋण सहयोगको व्यवस्था गर्न माग गर्दै आएका थिए । कार्यक्रमा शान्ती सुरक्षाको वर्तमान अवस्था तथा भावीरणनिती एवं सिसि टिभि व्यवस्थापन, महिला हिंसा, जिल्ला प्रहरी कार्यालय पर्वतको बर्तमान अबस्था भावी चुनौति लगाएतका विषयमा छलफल समेत गरीएको थियो । कार्यक्रममा प्रनाउ पन्तले जिल्लामा रहेको शान्ति सुरक्षा र प्रहरीको अवस्था र चुनौतिको बारेमा जानकारी गराएकी थिइन् ।







# आन्तरिक पर्यटनको महत्वपूर्ण केन्द्र बन्दै हुँडिकोट

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

विश्वमै प्रसिद्ध नेपालको पर्यटकीयस्थल पोखराको दक्षिण भेगको लेखनाथ नगरपालिका-१८ भरतपोखरीस्थित हुँडिकोट आन्तरिक पर्यटनको आकर्षक गन्तव्य बन्दै गएको छ । माछापुच्छ्रे हिमालका साथै पोखराको फेवातालसमेतको दृश्य र सात तालको बगैंचा शहर लेखनाथलाई एक साथ नाङ्गो आँखाले हेर्न सकिने हुँडिकोटमा पछिल्लो समयमा पोखरा लगायतका विभिन्न स्थानबाट पर्यटक पुग्न थालेका छन् ।पर्यटकीय आकर्षणको प्रशस्त सम्भावना भएर पनि पूर्वाधार र प्रचारप्रसारको अभावमा ओझेलमा परेपछि स्थानीय बरेली युवा क्लबको आयोजनामा २०६९ सालमा प्रथम हुँडिकोट महोत्सव सम्पन्न भएसँगै यसको प्रचारले नयाँ मोड लिएको हो । स्थानीय समाजसेवी एवम् महोत्सव मूल आयोजक समितिका संयोजक चेतबहादुर महतका अनुसार महोत्सवको सफलतापछि हुँडिकोटको पर्यटकीय सम्भाव्यताले पोखरा र यस आसपासका क्षेत्रमा चासो र चर्चा पाउन थालेको छ । 'हिमाली दृश्यावलोकन एवम् पदयात्राका लागि अत्यन्त उपयोगी स्थल हुँडिकोट प्रचारकै अभावका कारण लामो समय ओझेलमा परेको हो,' महतले भने । 'भूकम्प र नाकाबन्दीका कारण पोखराको बाह्य पर्यटनमा ठूलो असर परे पनि हुँडिकोट जस्ता पर्यटकीय स्थलमा सदाबहार आन्तरिक पर्यटन प्रवर्द्धन गर्न सकिने धेरै सम्भावना छन् ।'

माछापुच्छ्रे, अन्नपूर्ण, धौलागिरि लगायतका हिमशृङ्खला तथा सेती नदी, सात तालको बगैंचा भनेर चिनिने लेखनाथ नगरपालिका र पोखरा उपमहानगर क्षेत्र हुँडिकोटबाट एकसाथ नियाल्न सकिने सफल न्यूज अनलाइनमा खबर छ । समुद्री सतहबाट एक हजार १६५ मिटरको उचाईमा रहेको हुँडिकोट उच्च पहाडी भू-भागमा रहेका कारण सूर्योदय अवलोकनका लागि पनि उत्तिकै महत्वपूर्ण रहेको अर्का स्थानीय समाजसेवी गुरुप्रसाद पौडेलले बताए ।

'हुँडिकोटबाट कास्की, तनहुँ, लम्जुङ, मनाङ, गोरखा, चितवन, नवलपरासी, पाल्पा, पर्वत बाग्लुङ, म्याग्दी, स्याङ्जा जिल्लालगायत विभिन्न स्थानको एकैसाथ अवलोकन गर्न सकिन्छ,' पौडेलले भने । विगतका वर्षमा यातायातको असुविधाका कारण हुँडिकोट पुग्न निकै कठिनाइ हुने गरेकामा अहिले पोखराको विरौटा र लेखनाथको गगनगौंडाबाट बसहरु सञ्चालनमा आउन थालेका छन् । यो ठाउँ पोखराबाट लगभग १७ किलोमिटर टाढा पर्छ । तीन-चार घण्टाको अवधिमै पुग्न सकिने भएर पनि होला पोखरा र लेखनाथका विभिन्न ठाउँबाट पर्यटकहरु हुँडिकोट ओइरिन थालेका छन् । फलस्वरुप यहाँको आन्तरिक पर्यटन विस्तारै मौलाउन थालेको छ ।सार्वजनिक यातायातका माध्यमबाट भरत पोखरीको मनियल डाँडाको बस बिसौनी पुगेपछि लगभग १५ मिनेटको पैदल यात्रामा हुँडिकोट पुग्न सकिन्छ । चौबिसै घण्टा शीतल हावा लागिरहने यस ठाउँमा पुगेपछि जो कोही यहाँको भौगोलिक अवस्थिति एवम् दृश्यावलोकन बाट मोहित हुने गर्छन् । वर्षाद्को समय होस् वा हिउँदको, आसपासका क्षेत्रमा हुस्सु, कुइरो लाग्दा समेत केही प्रभाव नपर्ने यो स्थल सूर्योदय अवलोकन गर्न चाहनेका लागि पनि उत्तिकै मनोरम छ ।

भरतपोखरीको चिरगादी, आपुभञ्ज्याङ र छहरा हुँदै हुँडिकोट पुग्न सकिन्छ । यस अतिरिक्त तनहुँको दुलेगौंडाबाट चवादी, बरपौवा हुँदै हुँडिकोट पुगिने पदयात्रा मार्गको विकास गर्न सकिने पर्याप्त सम्भावना रहेको छ ।हुँडिकोटसँगै यहाँबाट नजिकै अति प्राचीन एवम् ऐतिहासिक धार्मिकस्थल कोटभैरव मन्दिर रहेको छ । यसकारण पनि यहाँ धार्मिक पर्यटनको पनि सम्भावना रहेको स्थानीवासी एवम् कोटभैरव मन्दिर संरक्षण समितिका अध्यक्ष फत्तबहादुर महत बताउँछन् । कोटभैरव मन्दिरका साथै हुँडिकोट आसपासका मनियल डाँडाको पशुपतिनाथ, सिलिङ्गेको सिद्धेश्वर महादेव, धारापानीको शिव मन्दिर, हुँडिकोटकै देउराली आदिका कारण यो धार्मिक पर्यटनका लागि पनि उपयुक्त गन्तव्य बन्न सक्ने उनको दाबी छ । उनका अनुसार कोटभैरव मन्दिरमा बाइसे-चौबिसे राजाका पालादेखि नै पूजाआजा गरिँदै आइएको छ र यहाँ भाकल गर्नेको मनोकांक्षा पूरा हुने जनविश्वास रहिआएको छ । प्राचीन किंवदन्ती अनुसार बरकोटका काला जटाभैरवका रुपमा पूजाआजा हुँदै आएको यो तीर्थस्थलमा कास्कीको भरतपोखरी, निर्मलपोखरी, कृस्ती गाविसका साथै स्याङ्जा र तनहुँका विभिन्न स्थानबाट दर्शनार्थीहरु आउने गरेको उनले बताए । जस्तोसुकै आपत् विपद्मा भैरवको स्मरण मात्रले पनि त्यो सङ्कट टर्ने जनविश्वास छ ।अत्यावश्यकीय पूर्वाधार व्यवस्थापन गर्न सकिए पोखरा भित्रिने विदेशी पर्यटकलाई एक दिवसीय अवलोकन भ्रमण एवम् पदयात्राका लागि हुँडिकोट पुऱ्याउन सकिने सम्भावना छ । यसै भएर यहाँ 'होमस्टे' वा अन्य सुविधाजनक होटेल स्थापना गर्ने तर्फ पनि सोच बढेको समाजसेवी चेतबहादुर महत बताउछन् । विदेशी पर्यटकको रोजाइमा काठमाडौंपछिको पोखरा प्रमुख स्थान भएको बताउने स्थानीय सञ्चारकर्मी एवम् प्रथम हुँडिकोट महोत्सव प्रचार समितिका संयोजक विष्णुहरि पौडेल वर्षेनी ठूलो सङ्ख्यामा विदेशी पर्यटक पोखरा पुग्ने गरेको भएपनि प्रचारकै अभावमा पर्यटकहरु हुँडिकोट पुग्न नसकेको धारणा राख्छन् । पोखरा वरपरका स्थलहरुमध्येको हुँडिकोट क्षेत्र विशिष्ट पहिचान बोकेर पनि पर्याप्त प्रचारप्रसार, होटल, सडकजस्ता पूर्वाधारको अभावमा ओझेलमा परेको तथ्यलाई ध्यानमा राख्दै अहिले यहाँका युवा जमात यसको प्रवर्द्धनमा सक्रिय रहनु सन्तोषको विषय हो ।

# रेन्बो ट्राउट माछाको विक्री केन्द्र जरेवरमा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

पाँचवर्ष अघि सार्दीखोलामा व्यवसायिक रुपमा रेन्बो ट्राउट माछा उत्पादन थालेको गण्डकी ट्राउट फार्म हाउसले अब पोखराको जरेबरमा बिक्री कक्ष खोल्ने भएको छ । सार्दीखोला र आसपासमा ट्राउटको उत्पादन ह्वात्तै बढेपनि पोखरामा सोचेजस्तो बजार विस्तार नभएपछि गण्डकीले बिक्रीकक्ष खोल्न लागेको हो । पाँचवर्ष अघि गण्डकीले १५ वटा 'रेसवे' बाट व्यवसाय थालेकोमा अहिले ६० वटा पुगेका छन् । त्यति मात्र नभएर रेस्टुरेन्ट, लज, स्विमिङ पुल समेत संचालन गर्दै आएको छ । गण्डकी ट्राउट फार्म हाउसका संचालक लक्षिन गुरुङले भने, 'हाम्रो फार्ममा उत्पादित माछा त यहीं खपत हुन्छ । तर अन्यत्रका माछाले बजार नपाएपछि पोखराका ग्राहकलाई केन्द्रित गरी बिक्री कक्ष खोल्न लागेको हो ।'

बिक्री कक्षमा माछाका साथमा मसला मिश्रित ग्रेभी समेत उपलब्ध गराइने उनले बताए । कास्कीमा व्यवसायिक रुपमा ट्राउट उत्पादन भए पनि सिमित रेस्टुरेन्टमा मात्र मीठो स्वादमा चाख्न पाएको र अब देखि हरेक उपभोक्ताको घरमा गण्डकी फार्म हासउकै स्वादमा माछा खान सक्ने बनाउन बिक्री कक्ष खोल्न लागिएको लक्षिनले जनाए । 'अधिक उपभोक्ताले ट्राउट माछा खान पाउन भन्ने हो' उनले भने, 'यसले बिक्री बढाउने अपेक्षा छ ।' नुवाकोट, रसुवा, सिन्धुपाल्चोक र काभ्रेमा भन्दा कास्कीमा ट्राउटको मूल्य निकै सस्तो भए पनि यहाँको ग्राहकको ध्यान तान्न नसकेपछि यो उपाय निकालिएको उनको भनाइ छ ।

उनले भने, 'चाउचाउ पानीमा हालेर एकछिन उमालेपछि खान मिलेजस्तै अब ट्राउट पनि सबैको भान्सामा सहजै पाक्ने बनाउन यसो गर्न लागिएको हो ।' लसुन, प्याजको लेदो बनाएर त्यसमा काजु समेत मिसाइ आवश्यक मसला थपेर लामो समयसम्म पकाएपछि ग्रेभी तयार हुन्छ । नुन भने आफ्नो रुची अनुसार राख्न सकिन्छ ।

माछाको लागि अलग्गै मसला आवश्यक पर्छ । अहिले ग्राहकहरुले ग्रेभी, फ्राइ, स्टिम र ग्रिल्ड माछाको स्वाद मात्र चाख्दै आएका छन् । विदेशमा यी वाहेकका पनि परिकार बन्ने गरेको र पोखरामा पनि सोही अनुसार उपलब्ध गराउन लागिएको लक्षिनले सुनाए । बिक्री कक्षमा फिंगर साइज, दुई सय ग्राम, छ सय ग्राम र एक किलो सम्मका गरी पाँच थरी माछा पाइनेछन् । जति सानो आकारका माछा उति मूल्य पर्ने छ ।

हाल पोखरामा आठ सय ५० रुपैयाँ प्रतिकिलोमा ट्राउट माछा उपलब्ध छ । फिंगर साइजको माछालाई भने ग्राहकले १२ सय रुपैयाँ तिर्नुपर्ने हुन्छ । एक किलो माछाको लागि एक सय ५० रुपैयाँको ग्रेभी चाहिन्छ । दुई किलो भन्दा बढी माछा खरिद गर्न चाहेमा घरघरमै पुऱ्याउने व्यवस्था समेत गरिएको अर्का संचालक अमृत गुरुङले बताए ।

लक्षिन र अमृत गुरुङ पाँच वर्ष अघि ८० लाख रुपैयाँ लगानिमा सार्दीखोलामा फार्म हाउस संचालनमा ल्याएका थिए । हालसम्म व्यवसायिक व्यवसायिक कृषि तथा ब्यापार आयोजना( प्याक्ट) को समेत गरी तीन करोड रुपैयाँ लगानि भइसकेको छ । अहिले कास्कीमा मात्र वार्षिक ५० टन भन्दा बढी ट्राउट उत्पादन हुँदै आएको छ । फाट्ट फुट्ट विदेश निर्यात बाहेक आन्तरिक बजारमै यो माछा खपत हुने गरेको छ ।

# आर्थिक संकटले टेलिफिल्म 'तीतो सत्य' बन्द

**गोल्डेन न्यूज संवाददाता**
**काठमाडौं ३० कार्तिक ।**

नेपाल टेलिभिजनबाट १२ वर्षदेखि निरन्तर प्रसारण हुँदै आएको हास्यव्यंग धाराबाहिक 'तीतो सत्य' बन्द भएको छ । 'तीतो सत्य'का निर्देशक एवं मुख्य कलाकार दीपकराज गिरीले फेसबुकमार्फत् उक्त जानकारी दिएका हुन् । '६ सय भागसम्म निरन्तर प्रसारण भइरहेको नेपालकै सबैभन्दा लामो हास्य धाराबाहिक 'तीतो सत्य' अब नेपाल टेलिभिजनमा प्रसारण हुने छैन,' उनले आफ्नो फेसबुक पोस्टमा लेखेका छन् ।

उनले नयाँ विषयबस्तु नआउने र विभिन्न बाधाहरुबीच दर्शकहरुको चाहनालाई सम्बोधन गर्न नसकिएको स्वीकार गर्दै भनेका छा्, 'जबरजस्ती कार्यक्रमलाई टिकाइरहनु भन्दा पछाडि हट्नु नै उपयुक्त ठानी यो १२ वर्षे यात्रालाई पूर्णविराम दिने निर्णय गरेका छौं ।' दीपकको उक्त भनाईलाई 'तीतो सत्य' की सहयात्री दिपाश्री निरौलाले 'तीतो सत्य भित्रको मीठो सत्य' भनी टिप्पणी गरेकी छन् । आर्थिक संकटबाट गुज्रिनु परेका कारण कलाकार तथा प्राविधिकलाई समयमा पारिश्रमिक दिन नसक्दा उर्जा कम भएको उनले बताइन ।

'पछिल्लो समय कार्यक्रम रिपिट गर्नुपर्ने अवस्था आयो,' उनले भने, 'यसले कार्यक्रमको विश्वसनीयता मा पनि प्रश्न उठायो ।' केही समयदेखि 'तीतो सत्य' को पूरानै भागहरु प्रसारण हुँदै आईरहेको थियो । लामो समयदेखि 'तीतो सत्य' सहित मिडिया हबबाट प्रसारित अन्य हास्य टेलिसिरियल कलाकारले पारिश्रमिक नपाएको गुनासो गर्दै आएका थिए । दीपकराजले भने अबको विश्रामलाई नयाँ कामका लागि गरिएको शक्ति संचयका रुपमा व्याख्या गरेका छन् ।

त्यसो त उक्त टिमले पछिल्लो समय 'छ एकान छ' र 'वडा नम्बर छ' गरी दुई फिल्म निर्माण गरिसकेको छ । 'भविष्यमा पनि फेरि नयाँ सोचका साथ हास्य धाराबाहिक तथा फिल्म निर्माणलाई निरन्तरता दिने नै छौं,' दीपकले लेखेका छन् ।

# धम्पुस तथा अन्नपूर्ण वेशक्याम्पमा सुरक्षा माग

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

प्रहरी चौकी धम्पुसको सार्वजनिक सुनुवाई सोमवार सम्पन्न भएको छ। प्रहरी चौकी धम्पुसले गरेका काम कारबाहीको जानकारी गराउने र स्थानियको सुझाव संकलन गर्ने उद्देश्यले सार्वजनिक सुनुवाई आयोजना गरिएको थियो । सार्वजनिक सुनुवाईमा स्थानीयवासीले पर्यटकीय क्षेत्र धम्पुस तथा अन्नपूर्ण वेश क्याम्प ईलाकाको शान्ति सुरक्षा सुदृढ बनाउन सुझाव दिएका थिए । उनिहरुले पर्यटकीय क्षेत्रको शान्ति सुरक्षामा गम्भीर हुन सम्बन्धित पक्षको ध्यानाकर्षण गराए । कास्कीका प्रहरी प्रमुख प्रहरी उपरीक्षक हरि बहादुर पालले स्थानीय वासीसँगको सहकार्यमा प्रहरी अघि बढ्ने बताए ।



स्थानीयको राय, सल्लाह, सुझाव अनुसार प्रहरीको काम कार्बाहीमा चुस्तता ल्याउने भन्दै उनले प्रहरी कर्मचारीप्रति कुनै गुनासो भए आफूलाई जानकारी दिन समेत आग्रह गरे । उनले पर्यटकीय क्षेत्रको शान्ति सुरक्षाप्रति प्रहरी गम्भिर रहेको बताए ।

कार्यक्रममा स्थानीयवासी, प्रहरी उपरीक्षक पाल सहित वडा प्रहरी कार्यालय बगरका प्रहरी निरीक्षक मोहन बहादुर खांण, पृथ्वी नारायण मा.वि. धम्पुसका शिक्षक सम बहादुर गुरुङ लगायतले शान्ति सुरक्षा र प्रहरीले गरेका कामकाबाहीको बारेमा बोलेका थिए । नेपाल प्रहरीले सम्पादन गरेका काम कार्वाहीहरुको सम्बन्धमा नागरिकलाई सुसूचित गराई प्रहरी कार्य सम्पादनमा भए गरेका कमी कमजोरीहरुलाई सुधार्दै जनउत्तरदायी बनाउने उद्देश्यले प्रत्येक ३ र ३ महिनामा नागरिक सुनुवाई कार्यक्रम गर्नुपर्ने प्रावधान छ ।

# महिला समन्वय समितिमा बराल

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ३० कार्तिक ।**

पोखरा उप-महानगरपालिका महिला समन्वय समितिको उपाध्यक्ष पदमा कांग्रेस नेतृ खेमकुमारी बराल नियुक्त भएकी छन् । उनलाई संघीय मामिला तथा स्थानिय विकास मन्त्रालयले मन्त्रीस्तरीय निर्णय गराउँदै २०७२ असोज २२ गते चार वर्षे कार्यकालका लागि नियुक्त गरेको हो । बराल यसअघिको शुसील कोईराला नेतृत्वको सरकारके पालामा उक्त पदमा नियुक्त भएपनि सार्वजनिक भएको थिएन । बिगत तीन दशकदेखि कांग्रेसको राजनीतिमा सक्रिय बराल नेपाल महिला संघको विभिन्न पदमा रहेर काम गरेकी थिईन् । उपाध्यक्ष पदमा नियुक्त भएसँगै पोखरा गोल्डेनन्यूज सँग कुरा गर्दै बरालले महिला अधिकार र महिला स्वाबलम्बन एवं दक्षता अभिबृद्धिका लागि आफ्नो स्थानबाट सक्दो पहल गर्ने प्रतिवद्धता जनाइन । कांग्रेसभित्र निष्ठावान र ईमान्दार राजनीति गर्ने कुशल महिला नेतृका रुपमा चिनिएकी बराल यसअघि लोकतान्त्रिक आन्दोलनसहित महिलाका पक्षमा भएका आन्दोलनमा पटक-पटक जेलजिवन बिताएकी थिईन् ।



## नाकाबन्दीको...

'उद्योग बन्द हुनुको पछाडि दुईवटा कारण रहेका छन्, पहिलो कारण कच्चा पदार्थको आपूर्ति हुन नसक्नु हो भने दोस्रोमा लोडसेडिङ हो' पौडेलले भने-'लोडसेडिङको विकल्पमा जेनेरेटर थियो, त्यो पनि डिजेल अभावले चल्न सकेको छैन ।' यसैगरी विराटनगरमा रहेको एशियन थाई फुड्स र क्वालिटी थाई फुड्स, चितवनको टाँडीमा रहेको स्मार्ट फुड्स, भैरहवामा रहेको जगदम्बा फुड्स, बनेपा र भैरहवामा रहेको हिमालयन स्न्याक्स एन्ड नुडल्स उद्योग पनि नाकाबन्दी र तराईमा जारी बन्द हड्तालका कारण प्रभावित भएका छन् । मायोज चाउचाउ उत्पादन गर्दै आएको हिमालयन स्न्याक्स एन्ड नुडल्स उद्योग पनि पूर्ण रुपमा बन्द भएको त्यहाँ कार्यरत कर्मचारीले बताएका छन् । कम्पनीले मायोज चाउचाउ नाकाबन्दी भएको धेरै पछिसम्म बजारमा उपलब्ध गराउँदै आएको थियो । चाउचाउ सबैभन्दा सजिलो खानाको रुपमा परिचित छ । विनाशकारी भूकम्पको समयमा तत्कालको भोक मेटाउन चाउचाउ निकै सहयोगी भएको थियो । भारतीय नाकाबन्दी र तराई आन्दोलनका कारण अहिले बजारमा खाद्यन्नको संकट पर्दा चाउचाउको पनि हाहाकार भएको छ । 'अहिले गोदाममै चाउचाउको अभाव भएको छ, बजारमा पठाउन सकिएको छैन' गन्डकी नुडल्सका प्रबन्ध निर्देशक पन्तले भने-'उद्योगले चाउचाउ बजारमा पठाउन नसक्दा नेपालभरी हाहाकार भएको छ ।'

## कोल्डस्टोर्समै...

स्टोरले क्षति पूर्ति दिनै पर्ने माग समेत गरेका छन् ।

यता, कोल्ड स्टोरका संचालकहरुले कृषकको आलु कुहिएको भन्ने गुनासोलाई अस्वीकार नगरेपनि कृषकले आलु स्टोर गर्ने बेलामा नै विशेष परिस्थितिका कारण आलु विग्रन गएमा त्यसको जिम्मेवारी कोल्ड स्टोरले नलिने भन्ने सम्झौता भएको बताएका छन् । कृषकले ल्याएको आलु राम्रोसंग नसुकेको कारणले मात्र नभएर मालेपाटन र पर्स्याङ क्षेत्रमा सडक विस्तारका क्रममा विद्यूत लाइन काटिएर लामो समय विद्युत आपूर्ति नहुँदा र पछिल्लो समयमा पेट्रोलियम पदार्थको सहज आपूर्ति नहुँदा कोल्ड स्टोरमा आवश्यकता अनुसार चिस्यान कायम हुन नसकेकोले समस्या आएको बताइन्छ । आफूहरुले कोल्ड स्टोरमा राखिएको कुनैपनि सामान नबिग्रियोस भनेर सजगता अपनाएको र आफ्नो तर्फबाट सक्दो पहल गरेको भएपनि राज्यका निकायबाट डिजेल आपूर्ति गर्ने विषयलाई सम्वेदनशील रुपमा नलिएपछि आफूहरुले जेनेरेटर संचालन गर्न नपाएको संचालकहरुको गुनासो छ । अधिकांश कृषकलाई भने उनीहरुले स्टोर गरेको आलुको अनुपातमा केही आलु वितरण गरिएको संचालकको भनाइ छ ।

जिल्ला कृषि विकास कार्यालय कास्कीले भने सो शीत भण्डार सञ्चालनमा कार्यालय सँग सरोकार नभएको बताएको छ । तर कृषकको समस्यमा भने कार्यालयको प्रत्यक्ष सरोकार रहेको वरिष्ठ कृषि विकास अधिकृत रमेशप्रसाद कोईरालाले बताए । बीउ लगाउने वेलामा स्टोर गरेर राखेको बीउ कुहिनु राम्रो भएन ।

तर यसमा कृषकहरुका पनि केही कमजोरी रहेको उनले बताएका छन् । चीसो आलु नओभाईकन भण्डारण गर्दा यो समस्या देखा परेको उनको भनाई छ । अर्को तिर जिरो किलोमिटर विन्ध्यवासिनी सडक खण्ड निर्माण गर्ने भन्दै सो क्षेत्रका रुख विरुवा फँडानी गर्ने वेलामा विजुलीको लाईन कटअफ हुँदाका वखत आलुको बीउ कुहिएको उनले बताए ।



सुनौलो पब्लिकेशन प्रा.लि.द्वारा प्रकाशित गोल्डेन न्यूज राष्ट्रिय दैनिकका लागि अध्यक्ष/प्रधान सम्पादक **गंगाधर पराजुली**, निर्देशक **हरिमणि बराल**, संस्थापक सम्पादक **रीता गुरुङ**
कार्यालय : चिप्लेढुंगा (सुनौलो भवन), पोखरा, फोन:०६१-५३९४५५, फ्याक्स : ५२२२२२, Email : goldennewspkr@gmail.com, Website: www.goldennews.com.np, मुद्रण **गोल्डेन अफसेट प्रेस**, चिप्लेढुंगा, पोखरा





